# स्थानीय स्वायत्त शासन ऐन, २०५५

<u>प्रमाणीकरण र प्रकाशन मिति</u>

२०५६।१।१६

**<u>संशोधन</u>**

गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६[◎] २०६६।१०।७

२०५६ सालको ऐन नं. ५

## स्थानीय स्वायत्त शासन सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन

**प्रस्तावना:** विकेन्द्रीकरणको माध्यमद्वारा सार्वभौमसत्ता सम्पन्न जनतालाई शासन प्रक्रियामा अधिकाधिक मात्रामा सम्मिलित हुने अवसर जुटाई प्रजातन्त्रका लाभहरूको उपभोग गर्न सक्ने व्यवस्था गर्न,

आफ्नो क्षेत्रको विकासको लागि साधनको परिचालन, विनियोजन र विकासको प्रतिफलको सन्तुलित तथा समान वितरणमा सामाजिक समानता ल्याउने कार्यमा जनजाति, आदिवासी, दलित र सामाजिक तथा आर्थिक दृष्टिकोणले पिछडिएका वर्ग समेतका समग्र जनताको सहभागितामा अभिवृद्धि गर्दै विकास प्रक्रियालाई संस्थागत गर्न,

योजनाहरूको तर्जुमा र सञ्चालन गर्न आवश्यक जिम्मेवारी र अधिकार स्थानीय स्तरमा नै प्रदान गरी जवाफदेही बहन गर्न सक्ने स्थानीय निकायहरूको संस्थागत विकास गर्न, र

स्थानीय नेतृत्वको विकास गरी जनताको दैनिक आवश्यकता तथा जनजीवनलाई असर पार्ने विषयहरूमा निर्णय गर्न सक्ने गरी स्थानीय स्वायत्त शासन पद्धतिको विकासको लागि स्थानीय निकायहरूको गठन गर्न वान्छनीय भएकोले,

**<u>श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेव</u>**को शासनकालको सत्ताइसौं वर्षमा संसदले यो ऐन बनाएको छ ।

[◎] यो ऐन संवत् २०६५ साल जेठ १५ गतेदेखि लागू भएको, प्रशस्ती र अधिराज्य शब्द झिकिएको ।

## भाग-१

## प्रारम्भिक

१. **संक्षिप्त नाम र प्रारम्भः** (१) यस ऐनको नाम "स्थानीय स्वायत्त शासन ऐन, २०५५" रहेको छ ।

(२) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषाः** विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "स्थानीय निकाय" भन्नाले गाउँ विकास समिति, नगरपालिका र जिल्ला विकास समिति सम्झनु पर्छ ।

(ख) "गाउँ परिषद्" भन्नाले दफा ८ बमोजिम गठित गाउँ परिषद् सम्झनु पर्छ ।

(ग) "गाउँ विकास समिति" भन्नाले दफा १२ बमोजिम गठित गाउँ विकास समिति सम्झनु पर्छ ।

(घ) "वडा समिति" भन्नाले गाउँ विकास समितिको सम्वन्धमा दफा ७ बमोजिम र नगरपालिकाको हकमा दफा ७५ बमोजिम गठित वडा समिति सम्झनु पर्दछ ।

(ङ) "अध्यक्ष" भन्नाले गाउँ विकास समितिको अध्यक्ष सम्झनु पर्छ ।

(च) "उपाध्यक्ष" भन्नाले गाउँ विकास समितिको उपाध्यक्ष सम्झनु पर्छ ।

(छ) "नगर परिषद्" भन्नाले दफा ७६ बमोजिम गठित नगर परिषद् सम्झनु पर्छ।

(ज) "नगरपालिका" भन्नाले दफा ८० बमोजिम गठित नगरपालिका सम्झनु पर्छ ।

(झ) "प्रमुख" भन्नाले नगरपालिकाको प्रमुख सम्झनु पर्छ ।

(ञ) "उपप्रमुख" भन्नाले नगरपालिकाको उपप्रमुख सम्झनु पर्छ ।

(ट) "जिल्ला परिषद्" भन्नाले दफा १७२ बमोजिम गठित जिल्ला परिषद् सम्झनु पर्छ ।

(ठ) “जिल्ला विकास समिति” भन्नाले दफा १७६ बमोजिम गठित जिल्ला विकास समिति सम्झनु पर्छ ।

(ड) “सभापति” भन्नाले जिल्ला विकास समितको सभापति सम्झनु पर्छ ।

(ढ) “उप-सभापति” भन्नाले जिल्ला विकास समितिको उप-सभापति सम्झनु पर्छ ।

(ण) “सदस्य” भन्नाले

(१) गाउँ विकास समितिको सम्वन्धमा गाउँ विकास समितिको सदस्य सम्झनु पर्छ र सो शब्दले गाउँ विकास समितिको अध्यक्ष र उपाध्यक्षलाई समेत जनाउँछ ।

(२) नगरपालिकाको सम्वन्धमा नगरपालिकाको सदस्य सम्झनु पर्छ र सो शब्दले नगरपालिकाको प्रमुख र उपप्रमुखलाई समेत जनाउँछ ।

(३) जिल्ला विकास समितिको सम्वन्धमा जिल्ला विकास समितिको सदस्य सम्झनु पर्छ र सो शब्दले जिल्ला विकास समितिको सभापति र उप-सभापतिलाई समेत जनाउँछ ।

(त) “सचिव” भन्नाले-

(१) गाउँ विकास समितिको सम्बन्धमा दफा २५३ बमोजिम गाउँ विकास समितिको सचिव भई काम गर्न नियुक्त कर्मचारी सम्झनु पर्छ ।

(२) नगरपालिकाको सम्वन्धमा दफा २५३ बमोजिम नगरपालिकाको सचिव भई काम गर्न नियुक्त कर्मचारी सम्झनु पर्छ ।

(३) जिल्ला विकास समितिको सम्वन्धमा दफा २५३ बमोजिम जिल्ला विकास समितिको सचिव भई काम गर्न नियुक्त कर्मचारी सम्झनु पर्छ ।

(थ) “तोकिएको” वा “तोकिएबमोजिम” भन्नाले यस ऐन वा यस ऐन अन्तर्गत बनेको नियम वा विनियममा तोकिएको वा तोकिएबमोजिम सम्झनु पर्छ ।

३. **स्थानीय स्वायत्त शासनका सिद्धान्त तथा नीतिहरू**: [⌘]नेपालको अन्तरिम संविधान, २०६३ ले मार्गनिर्देश गरेअनुसार नेपाल सरकारले स्थानीय स्वायत्त शासन पद्धतिको विकासको लागि देहायका सिद्धान्त तथा नीतिहरूलाई अवलम्बन गर्नेछ ।

(क) स्थानीय स्वायत्त शासनमा स्थानीय निकायहरूलाई सक्षम र प्रभावकारी बनाउन आवश्यक पर्ने अधिकार, जिम्मेवारी र स्रोत साधन निक्षेपण गर्ने ।

(ख) स्थानीय निकायमा स्थानीय जनताको लागि सोच्ने र जवाफदेही वहन गर्न सक्ने संस्थागत संयन्त्र र कार्यगत संरचनाको निर्माण गरी विकास गर्ने ।

(ग) स्थानीय निकायहरूलाई सुम्पिएका काम, कर्तव्य र जिम्मेवारीहरू र जवाफदेही वहन गर्नका लागि आवश्यक पर्ने स्रोत साधनहरू संकलन र परिचालन गर्ने अधिकार सुम्पने ।

(घ) स्थानीय निकायहरूलाई निक्षेपित कार्य गर्दा प्रजातान्त्रिक प्रक्रिया, पारदर्शी व्यवहार, जनउत्तरदायित्व र जनताको सहभागितामा आधारित नागरिक समाजको स्थापना गर्नेतर्फ उन्मुख गराउने ।

(ङ) स्थानीय नेतृत्वको विकास गर्नको निम्ति स्थानीय निकायलाई आफ्नो क्षेत्रमा जनताप्रति उत्तरदायी बनाउन प्रभावकारी संयन्त्रको व्यवस्था गर्ने ।

(च) दीगो विकासको लागि आधारित सेवा प्रदान गर्ने कार्यमा स्थानीय स्वायत्त शासनमा निजी क्षेत्रलाई सहभागी हुन प्रोत्साहित गर्ने ।



## भाग-२

## गाउँ विकास सम्बन्धी व्यवस्था

### परिच्छेद - १

### गाउँ विकास क्षेत्र, वडा विभाजन र वडा समिति

४. **गाउँ विकास क्षेत्र र केन्द्र तोक्ने**: (१) नेपाल सरकारले नेपालको कुनै ग्रामीण इलाकालाई भौगोलिक अवस्था, जनसंख्या, वासिन्दाहरूको सामुदायिक एकता वा

---

⌘ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा संशोधित ।

विविधतालाई समेत ध्यान दिई चार किल्ला खोली गाउँ विकास क्षेत्र तोक्न सक्नेछ। यसरी गाउँ विकास क्षेत्र तोक्दा नेपाल सरकारले आवश्यकताअनुसार जिल्ला विकास समितिको परामर्श लिनेछ ।

(२) नेपाल सरकारले गाउँ परिषद्को परामर्शमा उपदफा (१) वमोजिम तोकिएको गाउँ विकास क्षेत्रभित्रको पायक पर्ने स्थानलाई सो क्षेत्रको केन्द्र तोक्न सक्नेछ ।

(३) उदफा (२) बमोजिम तोकिएको गाउँ विकास क्षेत्रको केन्द्रमा गाउँ स्तरीय सबै कार्यालयहरू रहेनछन् ।

५. **वडा विभाजनः** दफा ४ बमोजिम तोकिएको गाउँ विकास क्षेत्रलाई नेपाल सरकारले भौगोलिक अवस्थालाई समेत ध्यान दिई यथासम्भव बराबर जनसंख्या पर्ने गरी नौ वडामा विभाजन गर्नेछ ।

६. **सिमाना हेरफेरः** (१) दफा ४ बमोजिम तोकिएको कुनै गाउँ विकास क्षेत्र वा दफा ४ बमोजिम विभाजन गरिएको कुनै वडाको सिमाना हेरफेर गर्न आवश्यक परेमा नेपाल सरकारले सम्बन्धित विशेषज्ञ समेत रहेको समिति गठन गरी सो समितिको सिफारिशमा निर्वाचन आयोगको स्वीकृति लिई प्रतिनिधि सभाको सदस्यको निर्वाचनका लागि कायम भएको निर्वाचन क्षेत्रलाई असर नपर्ने गरी त्यस्तो गाउँ विकास क्षेत्र वा वडाको सिमाना हेरफेर गर्नेछ ।

तर यसरी सिमाना हेरफेर गर्दा निर्वाचन हुने साल भन्दा एक वर्ष अगावै गरिसक्नु पर्नेछ ।

(२) कुनै गाउँ विकास क्षेत्रको सिमाना हेरफेर हुन आवश्यक छ भनी सम्वन्धित गाउँ परिषद्को दुई तिहाई बहुमतबाट प्रस्ताव पारित भै सम्बन्धित जिल्ला परिषद्ले सिफारिश गरेमा उपदफा (१) को अधिनमा रही नेपाल सरकारले सिमाना हेरफेर गर्नेछ ।

७. **वडा समितिको गठनः** गाउँ विकास समितिको प्रत्येक वडाका प्रचलित कानुन बमोजिम मतदाता हुन योग्यता पुगेका नेपाली नागरिकहरूले दफा १० बमोजिम गाउँ परिषद्को सदस्यको लागि चाहिने योग्यता पुगेका व्यक्तिहरू मध्येबाट निर्वाचित गरेका देहाय बमोजिमका वडाध्यक्ष र वडा सदस्यहरू रहने गरी एक वडा समिति गठन हुनेछः-

(क) एक जना वडाध्यक्ष,

(ख) एक जना महिला वडा सदस्य, र

(ग) तीन जना वडा सदस्यहरू ।

## परिच्छेद-२

## गाउँ परिषद् सम्बन्धी व्यवस्था

८. **गाउँ परिषद्को गठनः** (१) दफा ४ बमोजिम तोकिएको गाउँ विकास क्षेत्रमा एक गाउँ परिषद् गठन गरिनेछ ।

(२) गाउँ परिषद्मा देहाय बमोजिमका सदस्यहरू रहनेछन्ः-

(क) गाउँ विकास समितिका अध्यक्ष र उपाध्यक्ष,

(ख) प्रत्येक वडा समितिका वडाध्यक्ष, महिला वडा सदस्य र वडा सदस्यहरू,

(ग) गाउँ विकास क्षेत्रभित्रका एक जना महिलासहित समाजसेवी, आर्थिक तथा सामाजिक दृष्टिकोणले पिछडिएका जाति, जनजाति, दलित तथा आदिवासी मध्ये गाउँ परिषद्मा प्रतिनिधित्व हुन नसकेका वर्गका दफा १० बमोजिम गाउँ परिषद्को सदस्यको लागि चाहिने योग्यता पुगेका व्यक्तिहरूमध्येबाट गाउँ परिषद्द्वारा मनोनीत छ जना व्यक्तिहरू ।

९. **गाउँ परिषद्को सदस्यको पदावधिः** (१) गाउँ परिषद्को सदस्यको पदावधि पाँच वर्षको हुनेछ ।

(२) गाउँ परिषद्का सदस्यको पदावधि गणना गर्दा पदावधि शुरु हुने सालको श्रावण १ गतेदेखि गणना गरिनेछ र पाँच वर्षको पदावधि नबढाई प्रत्येक पाँचौ वर्षको आषाढ मसान्तमा पदावधि समाप्त भएको मानिनेछ ।

(३) उपदफा (१) र (२) मा जुनसुकै कुरा लेखिएको भएतापनि यस दफा बमोजिम गाउँ परिषद्को सदस्यको पदावधि समाप्त हुनु अगावै गाउँ परिषद्को नयाँ सदस्यको लागि निर्वाचन सम्पन्न भएमा गाउँ परिषद्को साविकको सदस्यको पदावधि

समाप्त भएको मानिनेछ र गाउँ परिषद्को नवनिर्वाचित सदस्यहरूलाई नै कार्य सञ्चालन गर्ने अधिकार हुनेछ ।

(४) कुनै कारणवश निर्धारित समयमा कुनै गाउँ विकास समितिको वा वडा समितिको सदस्यको पदको निर्वाचन वा गाउँ परिषद्को सदस्यको मनोनयन हुन नसकी अरू समयमा भए पनि त्यस्तो सदस्यको पदावधि गणना गर्दा निर्धारित समयमा निर्वाचित वा मनोनीत भएसरह मानी पदावधिको गणना गरिनेछ ।

(५) कुनै गाउँ परिषद्को सदस्यको पद कुनै कारणवश रिक्त हुन आएमा बाँकी अवधिको लागि मात्र सो रिक्त पदको पूर्ति निर्वाचित सदस्यको पदको लागि प्रचलित कानुन बमोजिम उप-निर्वाचनद्वारा र मनोनीत सदस्यको पदको लागि मनोनयनद्वारा गरिनेछ ।

तर-

(१) पद रिक्त भएको मितिले एक वर्षभित्र उप-निर्वाचन वा मनोनयन गरिसक्नु पर्नेछ ।

(२) एक वर्षभन्दा कम अवधिको लागि उप-निर्वाचन वा मनोनयन गरिने छैन ।

१०. <u>**गाउँ परिषद्को सदस्यको लागि चाहिने योग्यताः**</u> गाउँ परिषद्को सदस्य हुनको लागि देहाय बमोजिमको योग्यता पुगेको हुनुपर्नेछः-

(क) नेपाली नागरिक भएको,

(ख) एक्काईस वर्ष उमेर पूरा भएको र प्रचलित कानुन बमोजिम मतदाता हुन योग्यता पुगेको,

(ग) गाउँ विकास समितिलाई बुझाउनु पर्ने सबै जिन्सी वा नगदी बुझाइसकेको,

(घ) गाउँ विकास समितिसँग ठेक्का पट्टा वा चल अचल सम्पत्तिसम्बन्धी व्यवहारमा कुनै निजी स्वार्थ नभएको,

(ङ) सार्वजनिक सम्पत्ति हिनामिना गरेको नठहरेको,

तर असुली भएको प्रमाण पेश गरेमा यो खण्ड लागू हुने छैन ।

(च) नैतिक पतन देखिने फौजदारी अभियोगमा सजाय पाएको भए त्यस्तो सजाय भुक्तान गरेको तीन वर्ष व्यतीत भएको ।

(छ) कुनै कानुनले अयोग्य नभएको ।

११. **गाउँ परिषद्को सदस्यता कायम नरहने**: देहायको अवस्थामा गाउँ परिषद्को सदस्यता कायम रहने छैनः-

(क) दफा १० बमोजिमको योग्यता नभएमा,

(ख) आफू बसोबास गरिआएको वडा वा सोको भाग सम्बन्धित गाउँ विकास क्षेत्रबाट झिकिएमा वा अन्य कुनै गाउँ विकास क्षेत्र वा नगर क्षेत्रमा गाभिएमा,

(ग) जिल्ला विकास समितिको सभापति, उपसभापति वा सदस्यको पदमा निर्वाचित भएमा वा जिल्ला परिषद्को सदस्यमा मनोनीत भएमा,

(घ) प्रतिनिधि सभा वा राष्ट्रिय सभाको सदस्यको निर्वाचनमा उम्मेदवार भएमा वा राष्ट्रिय सभाको सदस्यमा मनोनीत भएमा,

(ङ) मनासिब माफिकको सूचना नदिई लगातार तीन पटकसम्म गाउँ परिषद्को बैठकमा अनुपस्थित भएमा,

तर त्यस्तो सदस्यलाई सफाइ पेश गर्ने मनासिव मौका नदिई निजको सदस्यता कायम नरहेको सूचना दिइने छैन ।

(च) दफा ९ बमोजिमको पदावधि समाप्त भएमा ।

(छ) प्रचलित कानुन बमोजिम भ्रष्टाचारको अभियोग वा नैतिक पतन देखिने फौजदारी अभियोग वा तीन वर्षभन्दा बढी कैद सजाय हुने फौजदारी अभियोगमा सजाय पाएमा,

(ज) राजीनामा दिएमा,

(झ) मृत्यु भएमा ।

## परिच्छेद-३

## गाउँ विकास समिति सम्बन्धी व्यवस्था

१२. **गाउँ विकास समितिको गठनः** (१) दफा ४ बमोजिम तोकिएको गाउँ विकास क्षेत्रमा गाउँ परिषद्को कार्यकारिणीको रूपमा एक गाउँ विकास समिति गठन गरिनेछ ।

(२) गाउँ विकास समितिमा देहायबमोजिमका अध्यक्ष, उपाध्यक्ष र सदस्यहरू रहनेछन्ः-

(क) गाउँ विकास क्षेत्रभित्रका प्रचलित कानुन बमोजिम मतदाता हुन योग्यता पुगेका नेपाली नागरिकहरूले निर्वाचन गरी पठाएका एक जना अध्यक्ष र एक जना उपाध्यक्ष,

(ख) गाउँ विकास क्षेत्रको प्रत्येक वडाका प्रचलित कानुनबमोजिम मतदाता हुन योग्यता पुगेका नेपाली नागरिकहरूले आ-आफ्नो वडाबाट एक-एकजनाको दरले निर्वाचन गरी पठाएका नौ जना वडाध्यक्षहरू,

(ग) दफा ८ को उपदफा (२) को खण्ड (ग) बमोजिमका गाउँ परिषद्का सदस्यहरू मध्येबाट एकजना महिलासहित गाउँ विकास समितिद्वारा मनोनीत दुई जना सदस्यहरू ।

१३. **गाउँ विकास समिति स्वशासित र संगठित संस्था हुनेः** (१) प्रत्येक गाउँ विकास समिति अविच्छिन्न उत्तराधिकारवाला स्वशासित र संगठित संस्था हुनेछ ।

(२) गाउँ विकास समितिको आफ्नो एउटा छुट्टै छाप हुनेछ ।

(३) गाउँ विकास समितिले व्यक्तिसरह चल-अचल सम्पत्ति प्राप्त गर्न, उपभोग गर्न र बेचबिखन गर्न सक्नेछ ।

(४) गाउँ विकास समितिले व्यक्तिसरह आफ्नो नामबाट नालिस उजूर गर्न र सो उपर पनि सोही नामबाट नालिस उजूर लाग्न सक्नेछ ।

१४. **सदस्यको पदावधिः** (१) गाउँ विकास समितिको सदस्यको पदावधि पाँच वर्षको हुनेछ ।

(२) गाउँ विकास समितिको सदस्यको पदावधि गणना गर्दा पदावधि शुरु हुने सालको श्रावण १ गतेदेखि गणना गरिनेछ र पाँच वर्षको पदावधि नबढाई प्रत्येक पाँचौ वर्षको आषाढ मसान्तमा पदावधि समाप्त भएको मानिनेछ ।

(३) उपदफा (१) र (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि यस दफाबमोजिम सदस्यको पदावधि समाप्त हुनु अगावै नयाँ सदस्यको लागि निर्वाचन सम्पन्न भएमा साविकको सदस्यको पदावधि समाप्त भएको मानिनेछ र नवनिर्वाचित सदस्यहरूलाई नै कार्य सञ्चालन गर्ने अधिकार हुनेछ ।

(४) कुनै कारणवश निर्धारित समयमा कुनै गाउँ विकास समितिको सदस्य पदको निर्वाचन वा मनोनयन सम्पन्न हुन नसकी अरू समयमा सम्पन्न भए पनि निर्वाचित वा मनोनीत सदस्यको पदावधि गणना गर्दा निर्धारित समयमा निर्वाचित वा मनोनीत भएसरह मानी पदावधिको गणना गरिनेछ ।

(५) कुनै गाउँ विकास समितिको सदस्य पद कुनै कारणवश रिक्त हुन आएमा बाँकी अवधिको लागि मात्र सो रिक्त पदको पूर्ति निर्वाचित सदस्यको पदको लागि प्रचलित कानुन बमोजिम उप-निर्वाचनद्वारा र मनोनीत सदस्यको पदको लागि मनोनयनद्वारा गरिनेछ ।

तर-

(१) पद रिक्त भएको मितिले एक वर्षभित्र उप-निर्वाचन वा मनोनयन गरिसक्नु पर्नेछ ।

(२) एक वर्षभन्दा कम अवधिको लागि उप-निर्वाचन वा मनोनयन गरिने छैन ।

१५. **शपथ ग्रहण गर्नुपर्नेः** (१) अध्यक्षले जिल्ला न्यायाधीशसमक्ष, उपाध्यक्ष र सदस्यहरूले अध्यक्षसमक्ष र अध्यक्षको अनुपस्थितिमा उपाध्यक्षले जिल्ला न्यायाधीशसमक्ष र सदस्यहरूले उपाध्यक्षसमक्ष शपथ ग्रहण गर्नु पर्नेछ ।

(२) उपदफा (१) मा लेखिएदेखि बाहेक गाउँ परिषद्का अन्य सदस्यले अध्यक्षसमक्ष र अध्यक्षको अनुपस्थितिमा उपाध्यक्षसमक्ष शपथ ग्रहण गर्नु पर्नेछ ।

(३) उपदफा (१) वा (२) बमोजिम शपथ ग्रहण नगरी गाउँ परिषद्का सदस्य तथा गाउँ विकास समितिका सदस्यहरूले पद ग्रहण गर्न पाउने छैनन् ।

१६. **पदत्याग गर्न सक्ने**: (१) अध्यक्षले उपाध्यक्षमार्फत् गाउँ विकास समितिसमक्ष र उपाध्यक्ष तथा सदस्यहरूले अध्यक्षसमक्ष राजीनामा दिई पदत्याग गर्न सक्नेछन् ।

(२) उपदफा (१) मा लेखिएदेखि बाहेक गाउँ परिषद्का अन्य सदस्यहरूले अध्यक्षसमक्ष राजीनामा दिई पदत्याग गर्न सक्नेछन् ।

१७. **सदस्यको लागि चाहिने योग्यता**: गाउँ विकास समितिको सदस्यमा निर्वाचित वा मनोनीत हुन देहाय बमोजिमको योग्यता हुनु पर्नेछः-

(क) नेपाली नागरिक भएको,

(ख) एक्काईस वर्ष उमेर पूरा भएको र प्रचलित कानुन बमोजिम मतदाता हुन योग्यता पुगेको,

(ग) गाउँ विकास समितिलाई बुझाउनु पर्ने सबै जिन्सी वा नगदी बुझाई सकेको,

(घ) गाउँ विकास समितिसँग ठेक्का-पट्टा वा चल-अचल सम्पत्ति सम्बन्धी व्यवहारमा कुनै निजी स्वार्थ नभएको,

(ङ) सार्वजनिक सम्पत्ति हिनामिना गरेको नठहरेको,

तर असुली भएको प्रमाण पेश गरेमा यो खण्ड लागू हुने छैन ।

(च) नैतिक पतन देखिने फौजदारी अभियोगमा सजाय पाएको भए त्यस्तो सजाय भुक्तान गरेको तीन वर्ष व्यतीत भएको ।

(छ) अन्य प्रचलित कानुनले अयोग्य नभएको ।

१८. **सदस्यता कायम नरहने**: देहायको अवस्थामा गाउँ विकास समितिको सदस्यता कायम रहने छैनः-

(क) दफा १७ बमोजिमको योग्यता नभएमा,

(ख) आफू बसोबास गरिआएको वडा वा सोको भाग सम्बन्धित गाउँ विकास क्षेत्रबाट झिकिएमा वा अन्य कुनै गाउँ विकास क्षेत्र वा नगर क्षेत्रमा गाभिएमा,

(ग) जिल्ला विकास समितिको सभापति, उप सभापति वा सदस्यको पदमा निर्वाचित भएमा वा जिल्ला परिषद्को सदस्यमा मनोनीत भएमा,

(घ) प्रतिनिधि सभा वा राष्ट्रिय सभाको सदस्यको निर्वाचनमा उम्मेदवार भएमा वा राष्ट्रिय सभाको सदस्यमा मनोनीत भएमा,

(ङ) मनासिब माफिकको सूचना नदिई लगातार तीन पटकसम्म गाउँ विकास समितिको बैठकमा अनुपस्थित भएमा,

तर, सदस्यलाई सफाइ पेश गर्ने मनासिब मौका नदिई निजको सदस्यता कायम नरहेको सूचना दिइने छैन ।

(च) प्रचलित कानुनबमोजिम भ्रष्टाचारको अभियोग वा नैतिक पतन देखिने फौजदारी अभियोग वा तीन वर्षभन्दा बढी कैद सजाय हुने फौजदारी अभियोगमा सजाय पाएमा,

(छ) दफा १४ बमोजिमको पदावधि समाप्त भएमा,

(ज) राजीनामा दिएमा,

(झ) मृत्यु भएमा ।

१९. **सम्पत्ति विवरण सार्वजनिक गर्नु पर्ने**: सदस्यले दफा १५ बमोजिम शपथ ग्रहण गरेको मितिले तीस दिनभित्र आफू र आफ्नो एकाघर सगोलका परिवारको सदस्यको नाममा रहेको चल अचल सम्पत्तिको विवरण सार्वजनिक गर्नु पर्नेछ ।

तर अध्यक्ष र उपाध्यक्षले आफू पदबाट हटेपछि पनि पदबाट हटेको मितिले तीस दिनभित्र त्यस्तो सम्पत्तिको विवरण सार्वजनिक गर्नु पर्नेछ ।

२०. **गाउँ विकास समितिहरूको वर्गीकरण**: नेपाल सरकारले जनसंख्या, भौगोलिक विविधता तथा यातायात, सञ्चार, शिक्षा र स्वास्थ्य सम्बन्धी सुविधाहरूको आधारमा गाउँ विकास समितिहरूलाई तोकिएबमोजिम वर्गीकरण गरी कम सुविधा उपलब्ध र अविकसित गाउँ

विकास क्षेत्रका गाउँ विकास समितिलाई सम्बन्धित जिल्ला विकास समितिको सिफारिशमा साधन र सुविधा सम्पन्न गराई विकसित गर्ने व्यवस्था मिलाउन सक्नेछ ।

## परिच्छेद-४

## बैठक र कार्य प्रणाली

२१. **वडा समितिको बैठकः** (१) वडा समितिको बैठक कम्तीमा महिनाको एक पटक बस्नेछ ।

(२) वडाध्यक्षले बैठक बस्ने मिति, समय र स्थान तोकी वडा समितिको बैठक बोलाउने छ ।

(३) वडा समितिको बैठकको अध्यक्षता वडाध्यक्षले गर्नेछ र निजको अनुपस्थितिमा बैठकमा उपस्थित वडा समितिका सदस्यहरूले आफूमध्येबाट छानेको सदस्यले वडा समितिको बैठकको अध्यक्षता गर्नेछ ।

(४) अध्यक्षता गर्ने व्यक्तिसहित तीनजना सदस्यको बहुमतले बैठकको निर्णय हुन सक्नेछ ।

(५) वडा समितिको बैठकसम्बन्धी अन्य कुरा वडा समिति आफैँले निर्धारण गरेबमोजिम हुनेछ ।

२२. **गाउँ परिषद्को बैठकः** (१) गाउँ परिषद्को बैठक साधारणतया वर्षको दुई पटक बस्नेछ ।

(२) गाउँ परिषद्को बैठक गाउँ विकास समितिको अध्यक्षले बोलाउनेछ ।

(३) प्रत्येक वर्ष गाउँ परिषद्को बैठक सामान्यतया श्रावण मसान्त र पौष मसान्तभित्र बोलाउनु पर्नेछ ।

(४) गाउँ परिषद्को प्रत्येक बैठकमा उपस्थित सदस्यहरूले गाउँ विकास समितिका सदस्यहरू बाहेक परिषद्का अन्य सदस्यले आफूमध्येबाट छानेको सदस्यले गाउँपरिषद्को बैठकको अध्यक्षता गर्नेछ ।

तर गाउँ परिषद्को बैठकमा अध्यक्षको छनौट हुनुभन्दा अघि गाउँ परिषद्का उपस्थित सदस्यहरू मध्ये उमेरको हिसाबले जेष्ठ सदस्यले सो बैठकको अध्यक्षता गर्नेछ ।

(५) गाउँ विकास समितिको सचिवले गाउँ परिषद्को सचिवको काम गर्नेछ ।

(६) गाउँ परिषद्को बैठक बस्ने मिति, समय र स्थानको सूचना बैठक बस्ने दिनभन्दा कम्तीमा पन्ध्र दिन अगावै गाउँ विकास समितिको अध्यक्षको निर्देशनमा सचिवले गाउँ परिषद्का सबै सदस्यहरूलाई पठाउनु पर्नेछ ।

(७) गाउँ परिषद्को बैठकमा तत्काल कायम रहेका सदस्य संख्याको पचास प्रतिशत सदस्यहरू उपस्थित भएमा बैठकको लागि गणपूरक संख्या पुगेको मानिनेछ ।

(८) गणपूरक संख्याको अभावमा गाउँ परिषद्को बैठक बस्न नसकेमा सात दिनको सूचना दिई अर्को बैठक बोलाउनु पर्नेछ । सो बैठकको गणपूरक संख्या एक तिहाई हुनेछ । सो गणपूरक संख्या पनि पूरा हुन नसकेमा सोको भोलिपल्ट पुनः अर्को बैठक बोलाउनु पर्नेछ । सो बैठकमा जतिसुकै सदस्य उपस्थित भए पनि बैठक सञ्चालन हुनेछ ।

(९) गाउँ परिषद्का एक तिहाई सदस्यहरूले कुनै खास विषयमा छलफल गर्न बैठक बोलाई पाउँ भनी अध्यक्षसमक्ष लिखित अनुरोध गरेमा त्यसरी अनुरोध गरेको मितिले तीस दिनभित्र गाउँ परिषद्को विशेष बैठक बोलाउनु पर्नेछ ।

(१०) गाउँ परिषद्को बैठकको निर्णय सचिवले प्रमाणित गर्नेछ ।

(११) गाउँ परिषद्को बैठक सम्बन्धी अन्य कार्यविधि तोकिएबमोजिम हुनेछ ।

२३. **गाउँ विकास समितिको बैठकः** (१) गाउँ विकास समितिको बैठक कम्तीमा महिनाको एक पटक बस्नेछ ।

(२) अध्यक्षको आदेशअनुसार सचिवले गाउँ विकास समितिको बैठक बोलाउनेछ ।

तर तीन महिनासम्म पनि अध्यक्षले बैठक बोलाउने आदेश नदिएमा एक तिहाई सदस्यहरूको लिखित अनुरोधमा सचिवले गाउँ विकास समितिको बैठक बोलाउनेछ ।

(३) गाउँ विकास समितिको बैठकको अध्यक्षता अध्यक्षले गर्नेछ र निजको अनुपस्थितिमा उपाध्यक्षले र उपाध्यक्ष पनि अनुपस्थित भएमा बैठकमा उपस्थित सदस्यहरूले आफू मध्येबाट छानेको सदस्यले बैठकको अध्यक्षता गर्नेछ ।

(४) गाउँ विकास समितिको बैठकमा तत्काल कायम रहेको सदस्य संख्याको पचास प्रतिशत सदस्यहरू उपस्थित भएमा बैठकको लागि गणपूरक संख्या पुगेको मानिनेछ ।

(५) जिल्ला विकास समितिको सम्बन्धित इलाका सदस्यलाई गाउँ विकास समितिको बैठकमा भाग लिनको लागि आमन्त्रण गर्नुपर्नेछ ।

(६) गाउँ विकास समितिको बैठकको निर्णय सचिवले प्रमाणित गर्नेछ ।

(७) गाउँ विकास समितिको बैठकसम्बन्धी अन्य कार्यविधि तोकिएबमोजिम हुनेछ ।

२४. **बैठकको निर्णयः** (१) यस ऐनमा अन्यथा व्यवस्था भएकोमा बाहेक गाउँ परिषद् र गाउँ विकास समितिको बैठकको निर्णय उपस्थित सदस्यहरूको बहुमतको आधारमा गरिनेछ ।

तर दफा २६ को उपदफा (१) को खण्ड (ख) र (ग) बमोजिमको प्रस्ताव सम्वन्धमा निर्णय गर्दा सम्पूर्ण सदस्य संख्याको बहुमतको आवश्यकता हुनेछ ।

(२) गाउँ परिषद् र गाउँ विकास समितिको बैठकमा मत बराबर भएमा बैठकको अध्यक्षता गर्ने व्यक्तिले निर्णायक मत दिनेछ ।

२५. **वडा समितिको काम, कर्तव्य र अधिकारः** गाउँ विकास समितिअन्तर्गतको प्रत्येक वडा समितिको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) वडाभित्रको बाटो, सडक, पुल, ढल, पोखरी, तलाउ, ईनार, कुवा, धारा आदि सफा सुग्घर राख्ने ।

(ख) वडाभित्रका फोहर, मैला र सडे गलेका वस्तुहरू फ्यांक्ने तथा सरसफाइको निमित्त वडावासीहरूलाई अभिप्रेरित गर्ने प्रबन्ध गर्ने ।

(ग) वडाभित्रको जनसंख्या, घर, जग्गा, पाटी, पौवा, धर्मशाला, मठ मन्दिर, मस्जिद, गुम्बा आदि देवस्थल, मदरसा, पर्ति जग्गा, पोखरी, तलाउ, ईनार, कुवा, धारा आदि सार्वजनिक महत्वका धार्मिक तथा सांस्कृतिक स्थलहरूको लगत राख्न तथा संरक्षण गर्न गाउँ विकास समितिलाई सहयोग गर्ने ।

(घ) वडाभित्रको नहर, कुलो, पैनी आदिको हेर विचार गर्ने ।

(ङ) वडाभित्रका पर्ति जग्गा र डाँडा, भीर, पाखा, आदिमा वृक्षारोपण गर्ने र वातावरण संरक्षणमा सहयोग पुऱ्याउने ।

(च) वडामा स्वास्थ्य केन्द्र, स्वास्थ्य चौकी आदिको व्यवस्थापनमा सहयोग पुऱ्याउने ।

(छ) वडामा विद्यालय तथा पुस्तकालयको स्थापना र सञ्चालनमा सहयोग पुऱ्याउने ।

(ज) वडाभित्र सञ्चालन भएको र पूरा भएको आयोजना तथा कार्यक्रमहरूको रेखदेख गर्ने ।

(झ) वडावासीहरूलाई व्यक्तिगत घटना दर्ता गर्न उत्प्रेरित गर्ने,

(ञ) वडाभित्रका पिछडिएका जनजाति, असहाय, अपांग तथा बेवारिस व्यक्तिहरूको संरक्षण र जीविकोपार्जन सम्वन्धी कार्यमा सहयोग पुऱ्याउने ।

(ट) सम्बन्धित गाउँ विकास समितिले दिएको निर्देशन तथा आदेशबमोजिमको अन्य काम गर्ने ।



२६. **गाउँ परिषद्को काम, कर्तव्य र अधिकारः** (१) गाउँ परिषद्को काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) गाउँ विकास समितिले पेश गरेको बजेट, योजना तथा कार्यक्रमहरू पारित गर्ने ।

(ख) गाउँ विकास समितिले प्रस्ताव गरेको कर, दस्तुर, महसूल, शुल्क आदि लगाउने तथा उठाउने सम्बन्धी प्रस्ताव पारित गर्ने ।

(ग) गाउँ विकास समितिले प्रस्ताव गरेको ऋण लिने वा अचल सम्पत्ति बेचबिखन वा हस्तान्तरण गर्ने सम्वन्धी प्रस्ताव पारित गर्ने ।

(घ) गाउँ विकास समितिको लेखा परीक्षण प्रतिवेदनबाट कायम भएका बेरुजुमाथि छलफल गरी प्रचलित कानुनबमोजिम नियमित गर्न नमिल्ने बेरुजुको हकमा बेरुजु फछ्र्यौटको लागि आवश्यक कारवाही गर्न गाउँ विकास समितिलाई निर्देशन दिने ।

(ङ) गाउँ विकास समितिले आफ्नो आन्तरिक स्रोत बाट व्यहोर्ने गरी प्रस्ताव गरेको कर्मचारीको दरवन्दी, पारिश्रमिक, भत्ता तथा अन्य सुविधामा आवश्यकतानुसार स्वीकृति दिने ।

(च) गाउँ विकास समितिको प्रशासनिक कार्यहरूको मूल्याङ्कन गरी गाउँ विकास समितिलाई आवश्यक निर्देशन दिने ।

(छ) गाउँ विकास क्षेत्रभित्र संचालित विकास-निर्माण कार्यहरूको मूल्याङ्कन गरी आवश्यक निर्देशन दिने ।

(ज) गाउँ विकास समितिको विनियम स्वीकृत गर्ने ।

(झ) तोकिएको अन्य काम गर्ने ।

(२) गाउँ परिषद्ले गाउँ परिषद्को कुनै एक सदस्यको अध्यक्षतामा निजसहित तीन जना सदस्यहरू रहेको एक लेखा समितिको गठन गर्नेछ, त्यस्तो समितिको काम, कर्तव्य र अधिकार तोकिएबमोजिम हुनेछ ।

(३) गाउँ परिषद्लाई विभिन्न विषयमा आवश्यक सल्लाह र सुझाव दिनको लागि उपदफा (२) बमोजिमको लेखा समितिमा रहने सदस्यहरू बाहेक गाउँ परिषद्का अन्य सदस्यहरूलाई तोकिएबमोजिमका विषयगत समितिहरूमा रहने गरी गाउँ परिषद्ले विभिन्न समितिहरू गठन गर्न सक्नेछ ।

(४) गाउँ परिषद्को अन्य काम, कर्तव्य र अधिकार तोकिएबमोजिम हुनेछ ।

२७. **सल्लाहकार समिति गठन गर्न सक्नेः** (१) गाउँ विकास समितिले आवश्यक ठानेमा आफ्नो काममा सहयोग पुऱ्याउन समाजसेवी, बुद्धिजीवी, प्राविधिक ज्ञान सीप भएका तीनदेखि नौ जनासम्मको एक सल्लाहकार समिति गठन गर्न सक्नेछ ।

(२) सल्लाहकार समिति सम्वन्धी अन्य कुरा तोकिएबमोजिम हुनेछ ।

२८. **गाउँ विकास समितिको काम, कर्तव्य र अधिकारः** (१) गाउँ परिषद्को निर्णय र निर्देशनहरू कार्यान्वयन गर्नु गराउनुको अतिरिक्त गाउँ विकास समितिको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) **कृषि सम्बन्धीः**

(१) गाउँ विकास क्षेत्रभित्र कृषि विकास कार्यक्रमहरू सञ्चालन गर्ने, गराउने ।

(२) गाउँ विकास क्षेत्रभित्र कृषि हाट, बजार र मेला लगाउने वा मेला लगाउन सहयोग गर्ने ।

(३) गाउँ विकास क्षेत्रभित्र पशु रोगको रोकथामका निमित्त आवश्यकता अनुसार पशु चिकित्सालयको सञ्चालन गर्ने, गराउने तथा पशु चरनको लागि आवश्यक गौचरनको व्यवस्था गर्ने, गराउने ।

(ख) **ग्रामीण खानेपानी सम्बन्धीः**

(१) गाउँ विकास क्षेत्रभित्र आवश्यक पर्ने खानेपानीको आपूर्तिको लागि खाने पानी आयोजना तयार गरी कार्यान्वयन र सञ्चालन गर्ने तथा संभारको व्यवस्था गर्ने, गराउने ।

(२) गाउँ विकास क्षेत्रभित्र इनार, कुवा, पोखरी, धारा आदिको निर्माण तथा मरमत संभार गर्ने, गराउने ।

(३) गाउँ विकास क्षेत्रभित्र पानीका मुहानहरूको संरक्षण गर्ने, गराउने ।

(ग) **निर्माण तथा यातायात सम्बन्धीः**

(१) गाउँ विकास क्षेत्रभित्र आवश्यक पर्ने घोडेटो र गोरेटो, ग्रामीण सडक सम्बन्धी आयोजना तयार गरी कार्यान्वयन गर्ने तथा तिनीहरूको मरमत संभारको व्यवस्था गर्ने ।

(२) विभिन्न निकायबाट हस्तान्तरण भई आएका पुल, तुइन, घाट तथा कलभर्टहरूको मरमत संभार गर्ने ।

(घ) **शिक्षा तथा खेलकूद सम्बन्धीः**

(१) आफ्नो स्रोतबाट पूर्व प्राथमिक विद्यालयहरू स्थापना गर्ने स्थापना गर्न अनुमति दिने तथा सञ्चालन र व्यवस्थापन गर्ने ।

(२) गाउँ विकास क्षेत्रभित्र सञ्चालन भएका विद्यालयहरूको रेखदेख र व्यवस्थापन गर्ने ।

(३) गाउँ विकास क्षेत्रभित्र मातृभाषामा प्राथमिक तहको शिक्षा उपलब्ध गराउन सहयोग गर्ने ।

(४) प्रौढ शिक्षा तथा अनौपचारिक शिक्षा सम्बन्धी कार्यक्रम बनाई सञ्चालन गर्ने, गराउने ।

(५) पुस्तकालयको स्थापना र सञ्चालन गर्ने, गराउने ।

(६) खेलकूदको विकास सम्बन्धी योजना बनाई कार्यान्वयन गर्ने र गाउँस्तरीय खेलकूद विकास समिति गठन गरी खेलकूदको विकासमा सघाउ पुऱ्याउने ।

(७) आर्थिक दृष्टिले अत्यन्त पिछडिएका उत्पीडित जनजातिहरूका छात्र-छात्राहरूलाई छात्रवृत्ति दिने व्यवस्था मिलाउने ।

(ङ) **सिंचाई र भू-क्षय तथा नदी नियन्त्रण सम्बन्धीः**

(१) गाउँ विकास क्षेत्रभित्र आवश्यक पर्ने सिंचाई, बाँध, कुलो, पैनी, पानीघाट आदिको आयोजना तयार गरी कार्यान्वयन गर्ने, गराउने ।

(२) गाउँ विकास क्षेत्रलाई प्रभाव पार्ने भू-क्षय र नदी नियन्त्रण सम्बन्धी कार्यक्रम तयार गरी कार्यान्वयन गर्ने, गराउने ।

(३) विद्युत उत्पादन तथा वितरण गर्ने, गराउने ।

(च) **भौतिक विकास सम्बन्धीः**

(१) सामुदायिक भवन, विश्राम गृह तथा सार्वजनिक सौचालय बनाउने ।

(२) गाउँ विकास क्षेत्रभित्र निर्माण हुने घर, भवन, सडक तथा अन्य भौतिक पूर्वाधार आदिको लागि मापदण्ड तयार गरी सो निर्माण गर्न तोकिएबमोजिम स्वीकृति दिने ।

(३) गाउँको भू-उपयोग योजना तर्जुमा गरी कार्यान्वयन गर्ने, गराउने ।

(४) बसोबास क्षेत्रमा आवश्यक ढल निकासको व्यवस्था गर्ने, गराउने ।

(छ) **स्वास्थ्य सेवा सम्बन्धीः**

(१) गाउँस्तरीय स्वास्थ्य केन्द्र, स्वास्थ्य चौकी तथा उप-स्वास्थ्य चौकीहरू सञ्चालन र व्यवस्थापन गर्ने ।

(२) गाउँ विकास क्षेत्रमा प्राथमिक स्वास्थ्य शिक्षा र सरसफाइ तथा फोहर मैला व्यवस्थापन सम्बन्धी कार्यक्रमहरू तयार गरी कार्यान्वयन गर्ने ।

(३) जडीबुटीको विकास तथा विस्तारमा सहयोग पुऱ्याउने ।

(४) परिवार नियोजन तथा मातृ-शिशु कल्याण सम्बन्धी कार्यक्रम सञ्चालन गर्ने ।

(ज) **<u>वन तथा वातावरण सम्बन्धीः</u>**

(१) पर्ति जग्गा, डाँडा, भीर पाखा एवं सार्वजनिक जग्गामा वृक्षारोपण गर्ने, गराउने ।

(२) गाउँ विकास क्षेत्रका वन, वनस्पति, जैविक विविधता, भू-संरक्षण सम्बन्धमा कार्यक्रम तयार गरी सञ्चालन गर्ने, गराउने ।

(३) वातावरण संरक्षण सम्बन्धी विभिन्न कार्यक्रम बनाई सञ्चालन गर्ने, गराउने ।

(झ) **<u>भाषा र संस्कृति सम्बन्धीः</u>**

(१) गाउँ विकास क्षेत्रभित्रका धर्मस्थल तथा धर्मशाला, पाटी, पौवा आदिको लगत राखी रेखदेख र संरक्षण गर्ने, गराउने ।

(२) विभिन्न भाषा, धर्म र संस्कृतिको संरक्षण गर्ने, गराउने र तिनीहरूको विकासमा सहयोग गर्ने ।

(ञ) **<u>पर्यटन तथा घरेलु उद्योग सम्बन्धीः</u>**

(१) पर्यटकीय क्षेत्रको संरक्षण, विकास र विस्तार गर्ने तथा त्यस्ता ठाउँमा प्रदुषण हुन नदिने व्यवस्था गर्ने, गराउने ।

(२) गाउँ विकास क्षेत्रमा घरेलु उद्योग सञ्चालन गर्नको निमित्त उत्प्रेरकको काम गर्ने ।

(ट) **विविधः**

(१) मानव साधनको विकास गर्ने, रोजगार तथा स्वरोजगारको अबसर प्राप्त हुने व्यवस्था गर्ने ।

(२) सहकारिताको लागि सहयोग पुऱ्याउने ।

(३) गाउँ विकास क्षेत्रभित्रको जनसंख्या, घर, जग्गा तथा पशुको लगत राख्ने ।

(४) दैवी प्रकोप नियन्त्रण गर्ने सम्बन्धमा आवश्यक काम गर्ने, गराउने ।

(५) प्रचलित कानुनबमोजिम जन्म, मृत्यु तथा अन्य व्यक्तिगत घटना दर्ता गर्ने ।

(६) गाउँ विकास क्षेत्रभित्रका असहाय, अनाथ र अपांग बालबालिकाहरूको लगत राख्ने र तिनीहरूलाई उपयुक्त ठाउँमा राख्ने व्यवस्था गर्ने ।

(७) गाउँ विकास क्षेत्रभित्रका महिलाहरूको उत्थानको लागि आवश्यक योजना तयार गरी कार्यान्वयन गर्ने ।

(८) राष्ट्रिय नीतिअनुरूप अनाथ बालबालिका, असहाय महिला, वृद्ध, अपांग तथा अशक्तहरूको संरक्षण सम्वन्धी कार्य गर्ने र सामाजिक कुरीति हटाउने तथा चेलीबेटी एवं नारी संरक्षण सम्बन्धी काम गर्ने, गराउने ।

(९) गाउँ विकास समितिको स्वामित्व तथा नियन्त्रणमा रहेको चल, अचल सम्पत्तिको संरक्षण गर्ने ।

(१०) गाउँ विकास समितिको विनियम तर्जुमा गरी गाउँ परिषद्मा पेश गर्ने ।

(११) गाउँ विकास क्षेत्रभित्र मादक पदार्थको बिक्री वितरण तथा जुवा तास आदि जस्ता अनैतिक कार्यको नियन्त्रण गर्ने ।

(१२) गाउँ विकास समितिलाई आयआर्जन हुने सहकारी, औद्योगिक तथा व्यवसायिक कार्यक्रम निजी क्षेत्रको समेत लगानीमा सञ्चालन गर्न प्रोत्साहित गर्ने, गराउने ।

(१३) सहकारितामा आधारित विविध कार्यक्रमहरू तर्जुमा गरी सञ्चालन गर्ने, गराउने ।

(१४) सचिवको कार्यको मूल्यांकन गरी सिफारिससहित अख्तियारवालासमक्ष पठाउने ।

(१५) प्रचलित कानुनबमोजिम तोकिएका अन्य कार्यहरू गर्ने ।

(२) गाउँ विकास समितिले गाउँ विकास क्षेत्रमा गर्नु पर्ने विकास निर्माण कार्यको लागि उपभोक्ता समूह तथा अन्य गैर-सरकारी संस्थाहरूलाई प्रोत्साहित गरी उक्त कार्यहरू त्यस्ता समूह वा संस्थाहरू मार्फत गर्नु गराउनु पर्नेछ ।

(३) गाउँ विकास समितिले यो ऐन तथा यस ऐनअन्तर्गत बनेको नियम तथा विनियमबमोजिम आफूलाई भएको अधिकारको प्रयोग गर्नेछ ।

२९. **अध्यक्षको काम, कर्तव्य र अधिकारः** (१) अध्यक्षको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) गाउँ परिषद् र गाउँ विकास समितिको बैठक बोलाउने ।

(ख) गाउँ परिषद् र गाउँ विकास समितिको बैठकमा आवश्यक प्रस्ताव र कागजात पेश गर्ने, गराउने ।

(ग) गाउँ विकास समितिको आम्दानी, खर्च हिसाब र अन्य कागजपत्र सुरक्षित राख्ने, राख्न लगाउने ।

(घ) गाउँ विकास समितिको बजेट र योजना तर्जुमा गर्ने सम्बन्धमा आवश्यक व्यवस्था मिलाउने ।

(ङ) गाउँ विकास समितिको निर्णय कार्यान्वयन गर्ने, गराउने ।

(च) गाउँ विकास समितिको दैनिक प्रशासनको रेखदेख र नियन्त्रण गर्ने,

(छ) प्रचलित कानुनबमोजिम आवश्यक सिफारिश गर्ने ।

(ज) गाउँ विकास समितिको चल-अचल सम्पत्ति हेरविचार तथा मरमत सम्भार गर्ने, गराउने ।

(झ) उपाध्यक्ष तथा सदस्यहरूलाई विषयगत रूपमा कार्यको विभाजन गर्ने ।

(ञ) आवश्यकता अनुसार उपाध्यक्ष, सदस्य तथा सचिवलाई काज खटाउने ।

(ट) सात दिनभन्दा बढी समय गाउँ विकास समितिमा उपस्थित हुन नसक्ने भएमा उपाध्यक्षलाई कार्यभार दिने र उपाध्यक्ष पनि नभएमा उमेरको आधारमा जेष्ठ सदस्य वा अन्य कुनै सदस्यलाई कार्यभार दिने ।

(ठ) तोकिएको अन्य काम गर्ने ।

(२) अध्यक्षले मनासिव कारणबाहेक लगातार तीस दिनभन्दा बढी आफ्नो गाउँ विकास समिति छाड्न हुँदैन ।

(३) उपदफा (२) को प्रयोजनका लागि मनासिव कारण हो होइन भन्ने प्रश्न उठेमा गाउँ विकास समितिले निर्णय गर्नेछ ।

३०. **उपाध्यक्षको काम, कर्तव्य र अधिकारः** (१) उपाध्यक्षको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) अध्यक्षको अनुपस्थितिमा कार्यबाहक अध्यक्ष भई कार्य गर्ने ।

(ख) तोकिएका अन्य काम गर्ने ।

(२) उपाध्यक्षले मनासिव कारण बाहेक लगातार तीस दिन भन्दा बढी आफ्नो गाउँ विकास समिति छाड्न हुँदैन ।

(३) उपदफा (२) को प्रयोजनका लागि मनासिव कारण हो होइन भन्ने प्रश्न उठेमा गाउँ विकास समितिले निर्णय गर्नेछ ।

३१. **सदस्यको काम, कर्तव्य र अधिकारः** (१) सदस्यको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) आफ्नो वडाको विकास-निर्माणको योजना तयार गरी गाउँ विकास समितिमा पेश गर्ने ।

(ख) विकास निर्माणको कार्य बारेमा छलफल गरी गैर सरकारी संस्थाबाट संभाव्य आयोजना गाउँ विकास समितिमा पठाउने प्रबन्ध गर्ने ।

(ग) वडासम्बन्धी विवरण माग भएमा गाउँ विकास समितिमा पेश गर्ने ।

(घ) उपभोक्ता समूह र गैर सरकारी संस्थालाई योजना छनौट र आयोजना तर्जुमामा सहयोग गर्ने ।

(ङ) सात दिनभन्दा बढी समय वडा समितिमा उपस्थित हुन नसक्ने भएमा दफा ७ को खण्ड (ख) र (ग) बमोजिमका वडा सदस्यहरूमध्ये जेष्ठ सदस्य वा अन्य कुनै सदस्यलाई कार्यभार दिने ।

(च) वडासदस्यहरूको कामको बाँडफाँड गर्ने ।

(छ) तोकिएका अन्य काम गर्ने ।

(२) सदस्यले मनासिव कारण बाहेक लगातार तीस दिनभन्दा बढी आफ्नो गाउँ विकास समिति छाड्न हुँदैन ।

(३) उपदफा (२) को प्रयोजनको लागि मनासिव कारण हो होइन भन्ने प्रश्न उठेमा गाउँ विकास समितिले निर्णय गर्नेछ ।

(४) सदस्यको कार्य सम्पादनमा सम्बन्धित वडा समितिका सदस्यहरूले सहयोग गर्नु पर्नेछ ।

३२. **सचिवको काम, कर्तव्य र अधिकार**: सचिवले अध्यक्षको प्रत्यक्ष निर्देशनमा रही देहायबमोजिमको काम, कर्तव्य र अधिकारको प्रयोग तथा पालना गर्नेछः-

(क) स्वीकृत गाउँ विकास कार्यक्रम कार्यान्वयन गर्ने ।

(ख) निर्माण कार्यमा हुने खर्चको हिसाब किताब राखी फरफारक गराउने ।

(ग) गाउँ विकास क्षेत्रभित्र संचालित र सम्पन्न आयोजनाको अद्यावधिक अभिलेख राख्ने ।

(घ) गाउँ विकास समितिको आय र व्ययको हिसाव राख्ने ।

(ङ) गाउँ विकास समितिले पारित गरेको बजेटभित्र रही गाउँ विकास समितिको निर्णय कार्यान्वयन गर्नको लागि खर्च गर्ने ।

(च) लेखापरीक्षण गराउने, बेरुजु फछ्र्यौट गराउने र बेरुजु रकम असुल उपर गर्नु पर्ने भए कानुनबमोजिम असुल उपर गर्ने ।

(छ) चल, अचल तथा जिन्सी सम्पत्तिको लगत राख्ने ।

(ज) गाउँ परिषद् तथा गाउँ विकास समितिको बैठकमा उपस्थित भई निर्णय माइन्यूट गर्ने, निर्णय पुस्तिकाको जिम्मा लिने र निर्णय प्रमाणित गर्ने ।

(झ) गाउँ विकास समितिमा दायर भएका मुद्दाको मिसिल जिम्मा लिने ।

(ञ) जन्म, मृत्यु तथा अन्य व्यक्तिगत घटना दर्ता गरी गाउँ विकास क्षेत्रभित्रको जनसंख्याको लगत दुरुस्त राख्ने ।

(ट) गाउँ विकास समितिअन्तर्गतका कर्मचारीहरूको प्रशासकीय नियन्त्रण गर्ने ।

(ठ) प्रचलित कानुनबमोजिम तोकिएका अन्य कामहरू गर्ने ।

## परिच्छेद - ५

## गाउँ विकास समितिको न्यायिक अधिकार

३३. **न्यायिक अधिकार**: नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकेको मितिदेखि गाउँ विकास क्षेत्रभित्रको देहायका मुद्दाहरूको शुरु कारबाही र किनारा गर्ने अधिकार गाउँ विकास समितिलाई हुनेछः-

(क) जग्गा तर्फ साँध सीमाना, सन्धी सर्पन, आलीधुर, बाँध पैनी, कुलो वा पानीको बाँडफाँड तथा बाटो वा निकास मिचेको मुद्दा,

(ख) बाली अर्मल मुद्दा,

(ग) वेठबेगर सम्बन्धी र ज्याला मजुरीको महल अन्तर्गतको मुद्दा,

(घ) गरीब कंगालको महल अन्तर्गतको मुद्दा,

(ङ) चौपाया हराउने र पाउनेको महल अन्तर्गतको मुद्दा,

(च) घर बनाउनेको महलको ८ नं. र ९ नं. अन्तर्गतको मुद्दा,

(छ) कल्याण धनको महल अन्तर्गतको मुद्दा,

(ज) नासो धरौटको महलको ५ नं. अन्तर्गतको मुद्दाबाहेक सो महल अन्तर्गतको अन्य मुद्दा,

(झ) अंशबण्डाको महलको १० नं. अन्तर्गतको इज्जत आमदअनुसार खान लाउन दिनु पर्ने विषयको मुद्दा,

(ञ) पानी घाटको प्रयोग तथा सार्वजनिक सम्पत्तिको सुरक्षा सम्बन्धी मुद्दा,

(ट) गोवध बाहेक चौपायाको महल अन्तर्गतको अन्य मुद्दा,

(ठ) चरन, घाँस, दाउरा सम्बन्धी मुद्दा,

(ड) अर्काको घरभित्र जवर्जस्ती पसेको, बसेको वा पस्न, बस्न खोजेको मुद्दा,

(ढ) सरकारी मुद्दा सम्बन्धी ऐन, २०४९ को अनुसूची - १ र २ मा उल्लेखित मुद्दा बाहेक नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकिदिएका अन्य मुद्दा ।

३४. **मध्यस्थ समितिको गठनः** (१) दफा ३३ बमोजिम गाउँ विकास समितिमा दायर भएका मुद्दाको कारबाही तथा किनारा गर्न गाउँ विकास समितिले मध्यस्थ समितिको गठन गर्नेछ ।

(२) उपदफा (१) बमोजिम गाउँ विकास समितिले मध्यस्थ समिति गठन गर्दा दफा ३५ बमोजिमको मध्यस्थहरूको सूचीमा रहेका व्यक्तिहरू मध्ये मुद्दाका पक्षहरूको सहमति भएका तीन जना व्यक्तिलाई मध्यस्थ समितिमा नियुक्ति गर्नेछ ।

(३) उपदफा (२) बमोजिम मध्यस्थ सूचीमा रहेका व्यक्तिहरू मध्येबाट मध्यस्थ नियुक्त गर्न मुद्दाका पक्षहरूको सहमति हुन नसकेमा मुद्दाका पक्षहरूले आ-आफ्नो तर्फबाट एक एक जना मध्यस्थ नियुक्त गरी त्यसको नाम गाउँ विकास समितिमा दिनु पर्नेछ । त्यसरी दुई जना मध्यस्थको नाम प्राप्त भएपछि गाउँ विकास समितिले दफा ३५ बमोजिमको मध्यस्थ सूचीमा रहेका व्यक्तिहरू मध्येबाट अर्को एक जना मध्यस्थ नियुक्ति गर्नेछ ।

(४) उपदफा (२) बमोजिम मध्यस्थको नियुक्तिमा मुद्दाका पक्षहरूको सहमति हुन नसकेमा वा उपदफा (३) बमोजिम मुद्दाका पक्षहरूले आ-आफ्नो तर्फबाट एक-एक जना मध्यस्थको नाम नपठाएको अवस्थामा गाउँ विकास समितिले दफा ३५ बमोजिमको मध्यस्थ सूचीमा रहेका तीन जना व्यक्तिलाई मध्यस्थ नियुक्ति गर्नेछ ।

(५) उपदफा (२), (३) वा (४) बमोजिम मध्यस्थमा नियुक्ति भएका मध्यस्थहरू मध्येबाट एक जनालाई गाउँ विकास समितिले मध्यस्थ समितिको अध्यक्ष तोक्नेछ ।

३५. **मध्यस्थहरूको सूची**: (१) यस ऐन अन्तर्गत दायर भएका मुद्दाको शुरु कारबाही र किनारा गर्ने प्रयोजनका लागि गाउँ विकास समितिले स्थानीय व्यक्ति एवं सामाजिक कार्यकर्ता मध्येबाट उपयुक्त देखिएका व्यक्तिहरूको सहमति लिई तिनीहरूको नाम, थर र वतन समेत खुलाई मध्यस्थहरूको सूची तयार गरी सार्वजनिक जानकारीको लागि गाउँ विकास समितिको कार्यालयमा प्रकाशन गरी राख्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिमको मध्यस्थहरूको सूचीमा गाउँ विकास समितिले यथासंभव महिला तथा पिछडिएका वर्गलाई समेत समावेश गर्नु पर्नेछ ।

३६. **अधिकारक्षेत्रको प्रयोग**: (१) मध्यस्थको अधिकारक्षेत्रको प्रयोग तीन जना मध्यस्थले सामूहिक रूपले गर्नेछन् र बहुमतको राय मध्यस्थको निर्णय मानिनेछ ।

(२) उपदफा (१) बमोजिम मध्यस्थहरूको बीचमा बहुमत नभई अलग-अलग राय भएमा ती रायहरू उल्लेख गरी गाउँ विकास समितिसमक्ष पेश गरिनेछ र उक्त विषयमा गाउँ विकास समितिले समर्थन गरेको राय नै मान्य हुनेछ ।

३७. **निर्णय गर्ने प्रक्रिया**: (१) मध्यस्थले आफूसमक्ष पेश भएको मुद्दामा यथासंभव सम्बन्धित पक्षहरूको बीच वार्ता गराई मिलापत्र गराउनेछ ।

(२) उपदफा (१) बमोजिम पक्षहरूको बीच मिलापत्र गराउन नसकेमा त्यस्तो मुद्दामा मध्यस्थले दफा ३६ बमोजिम आफ्नो अधिकारक्षेत्रको प्रयोग गरी निर्णय गर्नेछ ।

३८. **मुद्दाको लगत काट्ने**: दफा ३७ बमोजिम मिलापत्र वा निर्णय भएकोमा सो मिलापत्रमा वा निर्णयमा गाउँ विकास समितिले आफ्नो छाप लगाई आफ्नो अभिलेखमा राखी गाउँ विकास समितिमा दायर भएको उक्त मुद्दाको लगत कट्टा गर्नु पर्नेछ ।

३९. **मुद्दा सम्बन्धी कार्य प्रणाली**: यस ऐनबमोजिम गाउँ विकास समितिबाट शुरु कारबाही र किनारा हुने मुद्दाहरू दायर गर्ने प्रक्रिया, त्यस्तो मुद्दा सम्बन्धी जाँचबुझ तथा कारबाहीको तरिका, म्याद तामेल गर्ने विधि, पक्षहरू उपस्थित गराउने प्रक्रिया, म्याद तारिखको व्यवस्था, मुद्दा छिन्नु पर्ने अवधि, मिलापत्र वा निर्णय गर्दाको कार्य प्रणाली तोकिएबमोजिम हुनेछ ।

४०. **पुनरावेदन गर्न सक्ने अधिकार**: दफा ३७ को उपदफा (२) बमोजिम भएको निर्णयमा चित्त नबुझ्ने पक्षले निर्णय सुनी पाएको वा थाहा पाएको मितिले पैंतीस दिनभित्र सम्बन्धित जिल्ला अदालतमा पुनरावेदन गर्न सक्नेछ ।

४१. **निर्णयको कार्यान्वयन**: (१) गाउँ विकास समितिको आफ्नो अधिकारक्षेत्र अन्तर्गतका मुद्दा मामिलाको सम्बन्धमा भएका मिलापत्र वा निर्णयबमोजिम पक्षहरूले तिर्नु-बुझाउनु पर्ने दायित्व पूरा गर्न मञ्जुर गरेमा गाउँ विकास समितिले तत्काल मिलापत्र वा निर्णयको कार्यान्वयन गर्नु गराउनु पर्नेछ ।

(२) कुनै पक्षले मिलापत्र वा निर्णयबमोजिम तिर्नु बुझाउनु पर्ने दायित्व पूरा नगरेको अवस्थामा गाउँ विकास समितिले त्यसरी तिर्नु बुझाउनु पर्ने दायित्वको विवरणसहितको लगत मालपोत कार्यालयमा पठाउनु पर्नेछ ।

(३) उपदफा (२) बमोजिम लेखी आएमा सम्बन्धित कार्यालयले प्रचलित कानुनबमोजिमको रीत पुऱ्याई मिलापत्र वा निर्णयको कार्यान्वयन गरिदिनु पर्नेछ ।

४२. **मुद्दा सर्ने**: गाउँ विकास समिति ऐन, २०४८ बमोजिम गठित गाउँ विकास समितिसमक्ष रहेको मुद्दा वा उजूरीहरू यस ऐनबमोजिम गठित गाउँ विकास समितिमा सर्नेछन् ।

## परिच्छेद - ६

## गाउँ विकास समितिको योजना तर्जुमा र कार्यान्वयन प्रक्रिया

४३. **गाउँ विकास समितिको योजनाको तर्जुमा**: (१) प्रत्येक गाउँ विकास समितिले गाउँ विकास क्षेत्रको विकासका लागि आवधिक र वार्षिक योजना तर्जुमा गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम गाउँ विकास समितिको योजना तर्जुमा गर्दा गाउँ विकास समितिले आवश्यकता अनुसार वाह्य परामर्श सेवा प्राप्त गर्न सक्नेछ ।

(३) गाउँ विकास समितिले योजनाको तर्जुमा गर्दा देहायबमोजिमका आयोजनाहरूलाई प्राथमिकता दिनु पर्नेछः-

(क) उत्पादनमूलक तथा छिटो प्रतिफल प्राप्त गर्न सकिने ।

(ख) गाउँका जनताको जीवनस्तर, आम्दानी र रोजगार बढाउने तथा प्रत्यक्ष लाभ हुने र गरिबी निवारणमा सहयोग पुऱ्याउने ।

(ग) कम लागत तथा बढी जनसहभागितामा सञ्चालन हुने ।

(घ) स्थानीय साधन, स्रोत तथा शीपबाट सञ्चालन हुने ।

(ङ) पिछडिएका वर्ग तथा महिला वर्ग र बालबालिकालाई प्रत्यक्ष लाभ हुने ।

(च) वातावरणीय संरक्षण तथा संवर्द्धन गर्न सघाउ पुऱ्याउने ।

(४) आगामी वर्ष सञ्चालन हुने योजनाको तर्जुमा गर्न चालू वर्षमा देहायबमोजिम गर्नुपर्नेछः-

(क) प्रत्येक वर्षको मार्ग महिनासम्ममा गाउँ विकास समितिले जिल्ला विकास समिति तथा अन्य सम्बन्धित निकायहरूबाट अर्को आर्थिक वर्षको निमित्त मार्गदर्शन तथा साधन स्रोत को पूर्व-अनुमान प्राप्त गर्नु पर्नेछ । गाउँ विकास समिति आफैंले पनि अर्को आर्थिक वर्षको सेवा तथा विकास कार्यक्रम तर्जुमाको निमित्त विभिन्न वडा समितिबाट आयोजना छनौट तथा कार्यक्रम तर्जुमासम्बन्धी मार्गदर्शन उपलब्ध गराउनु पर्नेछ ।

(ख) गाउँ विकास क्षेत्रका वडा समितिहरू, उपभोक्ता समितिहरू र गैर सरकारी संस्थाबाट आयोजनाहरू माग गरी सो को आधारमा योजना तर्जुमा गर्नु पर्नेछ ।

(५) आवधिक योजना तर्जुमा गर्दा निम्न विषय समावेश गर्नु पर्नेछः-

(क) गाउँ विकास क्षेत्रको भौगोलिक, आर्थिक एवं प्राकृतिक सम्पदाहरू र तिनीहरूको वर्तमान उपयोग ।

(ख) विभिन्न क्षेत्रमा तुलनात्मक लागत लाभको हिसाबले उत्पादन गर्न सकिने संभावनाहरू ।

(ग) पिछडिएका जातजातिहरू एवं गरीवी भएको क्षेत्र तथा त्यस क्षेत्रमा गरिएका वा गरिनु पर्ने विभिन्न विकास कार्यहरू ।

(घ) महिला र बालबालिकाको लागि आयमूलक र सीपमूलक विकास कार्यहरू ।

(ङ) सम्पन्न भएका विभिन्न विषय क्षेत्र अन्तर्गतका आयोजनाहरूको विवरण र तिनीहरूको सञ्चालन तथा संभार सम्बन्धी व्यवस्था ।

(च) विकासका संभावनाका आधारमा विभिन्न विषय क्षेत्रगत अल्पकालीन एवं दीर्घकालीन विकास कार्यहरू र प्रदुषण रोक्ने कार्यहरू ।

(छ) स्थानीय बासिन्दाबाटै तयार गरिनु पर्ने विभिन्न विषय क्षेत्रका जनशक्ति विकास सम्बन्धी योजना ।

(६) वार्षिक योजना तर्जुमा गर्दा निम्न कुरालाई आधार लिनु पर्नेछः-

(क) राष्ट्रिय विकास नीतिसम्बन्धमा जिल्ला विकास समितिबाट प्राप्त निर्देशनहरू ।

(ख) आवधिक योजनाले परिलक्षित गरेका समष्टिगत आवश्यकताहरू ।



४४. **<u>स्रोत नक्सा तयार गर्नेः</u>** प्रत्येक गाउँ विकास समितिले गाउँ विकास क्षेत्रको विकासका निम्ति गाउँस्तरीय वस्तुगत तथ्याङ्क संकलन गरी गाउँको वस्तुस्थिति देखिने स्रोत नक्सा तयार गर्नु पर्नेछ ।

४५. **<u>आयोजनाको सम्भाव्यता अध्ययन गर्नु पर्नेः</u>** गाउँ विकास समितिले आफ्नो योजना कार्यान्वयन गर्ने क्रममा देहायबमोजिमका कुराहरू समेत खुलाई आयोजनाको सम्भाव्यता अध्ययन गर्नु गराउनु पर्नेछः-

(क) आयोजनाको लक्ष्य,

(ख) आयोजनाबाट फाईदा पाउने जनताको संख्या र फाईदाको किसिम,

(ग) छनौट गर्न लागिएको आयोजना नयाँ हो वा अधुरो हो,

(घ) आयोजना सञ्चालन नगरी अन्य कुनै उपायबाट आवश्यकताको पूर्ति वा समस्या समाधान हुन्छ, हुँदैन,

(ङ) आयोजना सम्पन्न गर्दा लाग्न सक्ने खर्च तथा सामग्रीको मूल्य तथा लाग्ने समयको अनुमान,

(च) उपभोक्ताहरूबाट प्राप्त हुन सक्ने नगद, वस्तुगत श्रम र त्यस्तै अन्य योगदान,

(छ) उपभोक्ताबाट उठ्न सक्ने शुल्क वा मर्मत सम्भार खर्च वा सञ्चालन व्यवस्था, र

(ज) अन्य खुलाउनु पर्ने कुनै कुरा भए सो ।

४६. **आयोजनाको छनौटः** (१) आयोजनाको छनौट गर्दा दफा ४४ बमोजिमको स्रोत नक्शा तथा आयोजनाको सम्भाव्यता अध्ययन प्रतिवेदनको आधारमा गर्नु पर्नेछ ।

(२) आयोजना छनौट गर्दा वातावरण संरक्षण तथा सम्बर्द्धन गर्ने किसिमले आयोजना छनौट गर्नु पर्नेछ ।

(३) आयोजना छनौट गर्दा बढी भन्दा बढी स्थानीय वासिन्दाहरूको सहभागिता र श्रम प्राप्त हुने आयोजनाहरू छनौट गर्नु पर्नेछ ।

(४) गाउँ विकास समितिलाई प्राप्त हुने अनुदानको अनुमान प्राप्त भएपछि प्राथमिकताको आधारमा आयोजना छनौट गर्नु पर्नेछ ।

(५) छनौट भएका आयोजनाको जानकारी गाउँवासीहरूबीच सार्वजनिक गराउनु पर्नेछ ।

४७. **गाउँ विकास समिति र सरकारी, गैर सरकारी निकायहरू बीच समन्वय गर्नेः** गाउँ विकास समितिले आफ्ना योजना र सेवा कार्यक्रम तर्जुमा गर्दा गाउँ विकास क्षेत्रमा विभिन्न सेवा र विकास कार्यक्रमहरू कार्यान्वयन गर्ने सरकारी तथा गैरसरकारी, गैरसरकारी तथा दातृ संस्थासँग देहायका विषयमा समन्वय कायम गर्नु पर्नेछः-

(क) कुनै पनि सेवाका क्षेत्रमा गरिने लगानीमा गाउँ विकास समिति र सम्बन्धित निकाय बीच दोहोरोपन हटाउने ।

(ख) लगानीकर्ताहरू बीच आपसमा परिपूरक समन्वय कायम गर्ने ।

(ग) दुबैको कार्यविधिमा उपभोक्ताहरूको भूमिका मुख्य रूपले कायम गर्ने ।

(घ) लगानीबाट गाउँवासीहरूले अधिकतम लाभ हासिल गर्न सक्ने तरिका अपनाउने ।

(ङ) विभिन्न कार्यक्रम कार्यान्वयनको समय तालिका निर्धारण गर्ने ।

४८. **गाउँ विकास समितिको योजना सञ्चालन:** (१) गाउँ विकास समितिको योजना देहायबमोजिम संचालित हुनेछन्:-

(क) गाउँ विकास समितिको आफ्नै स्रोतबाट,

(ख) जिल्ला विकास समितिको अनुदानबाट,

(ग) नेपाल सरकारको अनुदानबाट

(घ) विभिन्न गैर सरकारी संघ संस्थाबाट ।

(२) गाउँ विकास समितिले आयोजना छनौट गरेपछि सञ्चालन तालिका बनाई कार्यान्वयन गर्नु गराउनु पर्नेछ ।

(३) गैर सरकारी संस्थाबाट सञ्चालन हुने कार्यक्रम गाउँ विकास समितिसँग सम्झौता गरी सञ्चालन गराउनु पर्नेछ ।

(४) जिल्ला योजनामा समावेश गर्ने आयोजनाहरू गाउँपरिषद्बाट पारित गराई जिल्ला विकास समितिमा पठाउनु पर्नेछ ।

(५) गाउँ विकास समितिले सञ्चालन गर्ने कार्यक्रममा गैर सरकारी संस्थाहरूको लगानी समेत हुने अवस्थामा दुई संस्था बीच भएको संझौता अनुसार आयोजना सञ्चालन हुनेछ ।

(६) नेपाल सरकारको अनुदानबाट सञ्चालन हुने विशेष आयोजना नेपाल सरकारद्वारा तोकिएको प्रक्रिया बमोजिम संचालित हुनेछ ।

(७) गाउँ विकास क्षेत्रमा रहेको नगर विकास समितिले योजना तर्जुमा गर्दा गाउँ विकास समितिको परामर्शमा गर्नेछ ।

४९. **आयोजनाको कार्यान्वयन र व्यवस्थापनः** (१) गाउँस्तरका आयोजनाहरूको सञ्चालन उपभोक्ता समिति मार्फत गरिनेछ ।

(२) उपभोक्ता समितिका सदस्यलाई आयोजना सञ्चालनका लागि तालीम आवश्यक भएमा सो समेत प्रदान गर्नु पर्नेछ ।

(३) उपभोक्ता समितिले त्यस्तो आयोजनाबाट सेवा प्राप्त गर्ने उपभोक्ताबाट सेवा शुल्क असुल गर्न सक्नेछ ।

(४) उपदफा (३) बमोजिम प्राप्त सेवा शुल्कको रकम सम्बन्धित आयोजनाको मर्मत, संभार र संरक्षणमा खर्च गर्नु पर्नेछ ।

(५) उपदफा (३) र (४) बमोजिमको आम्दानी खर्चको विवरण उपभोक्ता समितिले अद्यावधिक गरी गाउँ विकास समितिमा पेश गर्नु पर्नेछ ।

५०. **निर्देशन पालन गर्नु पर्नेः** गाउँ विकास समितिले आफ्नो योजनाको तर्जुमा र सञ्चालन गर्ने सम्बन्धमा राष्ट्रिय योजना आयोग र जिल्ला विकास समितिले समय समयमा दिएको निर्देशन पालन गर्नु पर्नेछ ।

५१. **गैरसरकारी संस्थालाई प्रोत्साहित गर्नु पर्नेः** (१) प्रत्येक गाउँ विकास क्षेत्रभित्र गाउँ विकास कार्यक्रमहरूको पहिचान, तर्जुमा, स्वीकृति, सञ्चालन, रेखदेख, मूल्यांकन तथा मर्मत संभार गर्ने कार्यको लागि गाउँ विकास समितिले गैर-सरकारी संस्थाहरूलाई प्रोत्साहित गर्नु पर्नेछ ।

(२) गैरसरकारी संस्थाबाट सञ्चालन हुने आयोजनाहरू आफ्नै स्रोत र गाउँ विकास समिति तथा जिल्ला विकास समितिबाट प्राप्त स्रोत बाट सञ्चालन हुनेछन् ।

(३) सम्बन्धित संस्थाले आयोजना सम्बन्धी पूर्ण विवरण गाउँ विकास समितिमा पेश गर्नु पर्नेछ ।

(४) गैरसरकारी संस्थाले आयोजना सञ्चालन गर्दा गाउँ विकास समितिसँग समन्वय राखी गर्नु पर्नेछ ।

(५) गाउँ विकास समितिले गैरसरकारी संस्था मार्फत योजनाहरू कार्यान्वयन र सञ्चालन गर्न सक्नेछ ।

५२. **आयोजनाको समीक्षा**: गाउँ विकास समितिले गाउँविकास क्षेत्रभित्र संचालित आयोजनाहरूको त्रैमासिक रूपमा समिक्षा गर्नु पर्नेछ ।

५३. **आयोजनाको जाँचपास तथा फरफारक**: (१) आयोजना सम्पन्न भएपछि तोकिएबमोजिम जाँचपास र फरफारक गर्नु गराउनु पर्नेछ ।

(२) आयोजना सञ्चालन गर्ने निकायबाट आयोजना सम्पन्न भएको जानकारी गाउँ विकास समितिमा प्राप्त भएपछि प्राविधिकले पेश गरेको कार्यसम्पन्न प्रतिवेदन र मूल्यांकनको आधारमा गाउँ विकास समितिले जाँचपास र फरफारक गर्नेछ ।

(३) उपदफा (२) को प्रयोजनको लागि आवश्यक हुने प्राविधिक सहयोग गाउँ विकास समितिमा उपलब्ध नभएको अवस्थामा जिल्ला विकास समितिले उपलब्ध गराउनु पर्नेछ ।

(४) गाउँ विकास समिति आफैंले सम्पन्न गरेको आयोजना सम्बन्धमा जिल्ला विकास समितिलाई जानकारी गराउनु पर्नेछ र जिल्ला विकास समितिले यस्तो आयोजनाको प्राविधिक जाँच र मूल्याङ्कन गराइ सो को प्रतिवेदनको आधारमा सो आयोजनाको जाँचपास र फरफारक गर्नेछ ।

५४. **जाँचपास भएका आयोजनाको मर्मत सम्भार, विस्तार र व्यवस्थापन**: (१) गाउँ विकास समितिले आयोजना सम्पन्न भएपछि आयोजनाको मर्मत, सम्भार र विस्तारका लागि आयोजनाको सेवा प्राप्त गर्नेहरूबाट सेवा शुल्क लिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिमको सेवा शुल्कको रकमबाट आयोजनाको मर्मत, सम्भार, विस्तार र व्यवस्थापन गर्नु पर्नेछ ।

(३) उपदफा (१) र (२) बमोजिम आम्दानी खर्चको अद्यावधिक विवरण गाउँ विकास समितिले तयार गरी राख्नुपर्नेछ ।

# परिच्छेद - ७

## आर्थिक व्यवस्था

५५. **गाउँ विकास समितिले लगाउन पाउने कर**: गाउँ विकास समितिले आफ्नो क्षेत्रमा तोकिएको दरमा नबढ्ने गरी गाउँ परिषद्बाट पारित दरमा देहायबमोजिमका करहरू लगाउन सक्नेछः-

(क) **घर जग्गा कर**: गाउँ विकास क्षेत्रभित्रको घरको आकार, प्रकार र बनौट समेतको आधारमा प्रतिघर जग्गाको वार्षिक घर-जग्गा कर ।

(ख) **मालपोत वा भूमि कर**: गाउँ विकास क्षेत्रभित्रको जग्गामा मालपोत वा भूमि कर ।

तर मालपोत वा भूमिकरबाट उठेको राजश्वको पच्चीस प्रतिशत रकम जिल्ला विकास समितिलाई बुझाउनु पर्नेछ ।

(ग) **हाट, बजार, पसल कर**: गाउँ विकास क्षेत्रभित्र संचालित पशुहाट तथा नियमित हाट बजार, मेला, जात्रा आदिमा थापेको पसल बापत हाट बजार पसल कर ।

(घ) **सवारी साधन कर**: गाउँ विकास क्षेत्रभित्रका तोकिएको सवारीमा सवारी दर्ता तथा वार्षिक सवारी कर र आफ्नो क्षेत्रमा आउने सबै प्रकारका सवारीमा पटके सवारी साधन कर ।

तर नेपालभित्र प्रवेश गरेको तोकिएको सवारीमा उक्त सवारी सबभन्दा पहिले विदेशबाट जुन गाउँ विकास क्षेत्रभित्र प्रवेश गर्छ सो क्षेत्रको गाउँ विकास समितिले तोकिएबमोजिम कर लगाउन सक्नेछ र एक गाउँ विकास क्षेत्रभित्र कर तिरेपछि अन्यत्र पुनः त्यस्तो कर लाग्नेछैन ।

(ङ) **मनोरञ्जन कर**: गाउँ विकास क्षेत्रमा रहेको स्वीकृत सिनेमाहल, भिडियोहल, सांस्कृतिक प्रदर्शन हल जस्ता मनोरञ्जन स्थलमा तोकिएबमोजिम मनोरञ्जन कर लगाउन सक्नेछ ।

(च) **बहाल विटौरी कर**: गाउँ विकास क्षेत्रभित्र आफूले निर्माण, रेखदेख वा सञ्चालन गरेको हाट बजार, ऐलानी जग्गा वा बाटोको छेउका भाडामा दिएका अस्थायी पसलहरूमा बहालविटौरी कर ।

(छ) **विज्ञापन कर**: गाउँ विकास क्षेत्रभित्र राखिएका साईन बोर्डमा विज्ञापन कर ।

(ज) **व्यवसाय कर**: गाउँ विकास क्षेत्रभित्र तोकिएको उद्योग, व्यापार व्यवसाय वा पेशामा व्यवसाय कर ।

(झ) **व्यावसायिक भिडियो कर**: गाउँ विकास क्षेत्रभित्र व्यावसायिक भिडियो कर ।

(ञ) **प्राकृतिक स्रोत उपयोग कर**: गाउँ विकास क्षेत्रभित्रको प्राकृतिक स्रोत सम्पदाको व्यवसायिक उपयोग गरेवापत लाग्ने कर ।

(ट) तोकिएबमोजिम अन्य कर लगाउने ।

**५६. सेवा शुल्कः** (१) गाउँ विकास समितिले आफ्नो क्षेत्रभित्र आफूले उपलब्ध गराएको सेवा वापत गाउँ परिषद्बाट पारित दरमा देहायबमोजिमको सेवा शुल्क लगाउन सक्नेछः-

(क) सरसफाइ, ढल निकास सेवा शुल्क ।

(ख) पर्यटकीय क्षेत्र प्रवेश शुल्क ।

(ग) पार्क, उद्यान, पिकनिक क्षेत्र र भ्यू टावर आदिमा प्रवेश शुल्क ।

(घ) जादु, सर्कस जस्ता मनोरञ्जन गराएबापत शुल्क ।

(२) गाउँ विकास समितिले कसैको रकम कलम उठाइ दिएमा उठेको रकमबाट सेवा शुल्क लिन सक्नेछ ।

**५७. दस्तुर**: गाउँ विकास समितिले आफ्नो क्षेत्रभित्र तोकिएको दरमा नबढ्ने गरी गाउँ परिषद्बाट पारित दरमा देहायबमोजिमको दस्तुर लगाउन सक्नेछः-

(क) टेलिभिजन, भिडियो र अन्य उपकरणको लाइसेन्स तथा नवीकरण दस्तुर ।

(ख) बक्सौनी दस्तुर ।

(ग) सिफारिश दस्तुर ।

५८. **बिक्री गरी आय आर्जन गर्न सक्ने**: गाउँ विकास समितिले आफ्नो क्षेत्रभित्रका देहायका वस्तुहरू बिक्री गर्न सक्नेछः-

(क) सरकारी पर्ती जग्गाको माटो ।

(ख) सार्वजनिक पोखरी वा बगैंचाको उत्पादन ।

(ग) गाउँ विकास समितिको सम्पत्ति ।

(घ) गाउँ विकास क्षेत्रभित्रको वन पैदावार मध्ये सुकेको काठ दाउरा, हाँगा, झिंजा, जराजुरी आदि ।

(ङ) खर घाँस आदि ।

५९. **ऋण लिन सक्ने**: गाउँ विकास समितिले गाउँ परिषद्बाट स्वीकृत भएबमोजिम गाउँ विकास समितिको हक भोगको चल-अचल सम्पत्ति धितो राखी वा नराखी वा नेपाल सरकारको जमानीमा बैंक वा अन्य कुनै संघ-संस्थाबाट ऋण सापटी लिन सक्नेछ ।

६०. **गाउँ विकास समिति कोषः** (१) गाउँ विकास समितिको एउटा कोष रहनेछ ।

(२) उपदफा (१) बमोजिमको कोषमा देहायबमोजिमका रकमहरू रहनेछन्:-

(क) नेपाल सरकार वा जिल्ला विकास समितिबाट प्राप्त रकम ।

(ख) दस्तुर, शुल्क, महसूल, बहालबाट प्राप्त रकम ।

(ग) गाउँ विकास समितिको चल अचल सम्पत्ति वा अन्य वस्तुको बिक्रीबाट प्राप्त रकम ।

(घ) सार्वजनिक खोला नालाको पानी सार्वजनिक प्रयोगबाहेक अन्य प्रयोगबाट प्राप्त रकम ।

(ङ) चन्दा, दान, सहायता वा उपहारबाट प्राप्त रकम ।

(च) गाउँ विकास क्षेत्रभित्रको वन पैदावार चोरी निकासी रोक्ने काममा सहयोग पुऱ्याएबापत पाउने रकम ।

(छ) आयमूलक कार्यक्रमबाट प्राप्त रकम ।

(ज) बैंक वा अन्य कुनै संघ संस्थाबाट लिएको ऋृण सापटी रकम ।

(झ) दण्ड जरिवानाबाट उठेको रकम ।

(ञ) नेपाल सरकारले तोकिदिएको वा अन्य प्रचलित कानुनबाट प्राप्त अख्तियारीबाट आउने रकम ।

(३) कोषमा जम्मा भएको रकम बैंकमा जम्मा गर्नु पर्नेछ ।

६१. **कोषको रकम खर्च गर्ने तरिकाः** (१) कोषको सञ्चालन अध्यक्ष वा निजले तोकेको सदस्य र सचिवको संयुक्त दस्तखतबाट हुनेछ ।

(२) गाउँ परिषद्‌बाट वार्षिक बजेट तथा कार्यक्रम स्वीकृत नगरी कोषबाट रकम खर्च गर्न पाइने छैन ।

(३) सचिवले गाउँ परिषद्‌ले पारित गरेको बजेट तथा कार्यक्रमको अधिनमा रही गाउँ विकास समितिको निर्णय कार्यान्वयन गर्न कोषबाट रकम खर्च गर्न सक्नेछ ।

(४) कोषको रकम खर्च गर्दा तोकिएबमोजिम खर्च गर्नु पर्नेछ ।

(५) कोषबाट खर्च गरेको रकमको आर्थिक प्रतिवेदन गाउँ परिषद्‌को बैठकमा पेश गर्नु पर्नेछ र गाउँ विकास समितिले आफ्नो आय र व्ययको जानकारी प्रत्येक गाउँ परिषद्‌को बैठक भएको मितिले एक महिनाभित्र सार्वजनिक रूपमा वडा-वडामा समेत गराउनु पर्नेछ ।

६२. **रकमान्तरः** गाउँ परिषद्‌बाट स्वीकृत वार्षिक बजेटको शीर्षकको दश प्रतिशतमा नबढाई गाउँ विकास समितिले रकमान्तर गर्न सक्नेछ ।

तर भैपरी आउने र आर्थिक सहायतामा भने रकमान्तर गर्न सकिने छैन ।

६३. **निर्माण तथा अन्य ठेक्का पट्टाः** (१) गाउँ विकास समितिले निर्माण कार्य गराउँदा देहायबमोजिम गर्नु, गराउनु पर्नेछः-

(क) ठेक्का पट्टा तथा अन्य कारोबार तोकिएबमोजिम हुने गरी ।

(ख) गाउँस्तरीय योजनाको हिसाब किताब सम्बन्धित निकायहरूले राख्नु पर्ने गरी ।

(२) गाउँ विकास समितिले आफैं वा गैर सरकारी संस्थामार्फत् विकास-निर्माणका कार्यहरू तोकिएबमोजिम उपभोक्ता समूह, ठेक्का वा अमानतबाट गराउन सक्नेछ ।

(३) गाउँ विकास समितिबाट गरिने ठेक्का-पट्टाको लिखतमा अध्यक्ष वा निजले तोकेको सदस्य र सचिवको संयुक्त दस्तखत हुनुपर्नेछ ।

६४. **लिलाम बिक्रीको व्यवस्थाः** गाउँ परिषद्बाट स्वीकृत नीतिअनुसार गाउँ विकास समितिलाई काम नलाग्ने सरसामान वा सम्पत्तिको लिलाम बिक्री तोकिएबमोजिम हुनेछ ।

६५. **बजेटको बाँकी रकमः** एक आर्थिक वर्षमा खर्च हुन नसकी बाँकी रहेको बजेटको रकम चालू वर्षमा अधूरा रहेका आयोजना र कार्यक्रम सञ्चालन गर्नको लागि आगामी आर्थिक वर्षको बजेटमा समावेश गर्नु पर्नेछ ।

६६. **श्रेस्ता राख्नेः** गाउँ विकास समितिले आफ्नो आय र व्ययको श्रेस्ता तोकिएबमोजिम राख्नु पर्नेछ ।

६७. **पारिश्रमिक र बैठक भत्ताः** (१) अध्यक्ष र उपाध्यक्षले तोकिएबमोजिम पारिश्रमिक पाउनेछन् ।

(२) गाउँ विकास समितिको बैठकमा भाग लिएबापत सदस्यहरूलाई तोकिएबमोजिमको बैठक भत्ता दिन सकिनेछ ।

६८. **गाउँ विकास समितिको सम्पत्तिः** (१) गाउँ विकास क्षेत्रभित्रको देहायका सम्पत्ति उपर गाउँ विकास समितिको पूरा हक हुनेछ र त्यस्तो सम्पत्तिको रेखदेख मर्मत, संभार तथा प्रबन्ध गाउँ विकास समितिले गर्नु पर्नेछः-

(क) गाउँ विकास समितिको कोषबाट बनेको, खरीद भएको, नेपाल सरकार, जिल्ला विकास समिति वा संघ संस्था वा कुनै व्यक्तिले दिएको सम्पत्ति ।

(ख) कुनै व्यक्ति विशेषको निजी हक नभएको र नेपाल सरकार वा जिल्ला विकास समितिको स्वामित्वमा नरहेको सार्वजनिक ढल, नाला, पुल, पोखरी, देवालय, शिवालय, पाटी, पौवा, घर, कूवा, धारा, ईनार, गौचर, पानीघाट, निकास र बाटो ।

(ग) प्रचलित वन सम्बन्धी कानुन वा नेपाल सरकारले दिएको वन ।

(घ) प्राकृतिक सम्पदा ।

(२) उपदफा (१) बमोजिमको सम्पत्ति गाउँ विकास समितिले नेपाल सरकारको स्वीकृतिबिना बेच-बिखन गर्न वा अरू कुनै व्यहोराले हकभोग छोड्न पाउने छैन । स्वीकृति बिना बेच-बिखन गरेमा वा हक छाडी कसैलाई दिएमा जुनसुकै अवस्थामा पनि स्वतः बदर हुनेछ ।



६९. **लेखापरीक्षणः** (१) गाउँ विकास समितिको आन्तरिक लेखापरीक्षण जिल्ला विकास समितिले आर्थिक वर्ष समाप्त भएको मितिले चार महिनाभित्र गर्नेछ ।

(२) गाउँ विकास समितिको अन्तिम लेखा परीक्षण गाउँ परिषद्बाट गठित लेखा समितिको सिफारिशमा जिल्ला विकास समितिले स्वीकृत गरेको लेखा परीक्षकबाट गराउनु पर्नेछ ।

(३) लेखापरीक्षण प्रतिवेदनमा उल्लेख गरिएका बुँदामाथि आवश्यक कारबाही गरी सो को विवरणसहित अध्यक्षले सो प्रतिवेदन लेखा समितिसमक्ष प्रस्तुत गर्नु पर्नेछ ।

(४) लेखा समितिले उपदफा (३) बमोजिम अध्यक्षबाट प्राप्त प्रतिवेदन अध्ययन गरी आफ्नो राय सुझावसहित गाउँ परिषद्मा पेश गर्नु पर्नेछ ।

(५) गाउँ परिषद्ले लेखा समितिको राय सुझावसहित प्राप्त प्रतिवेदन माथि छलफल गरी लेखापरीक्षणबाट कायम भएका बेरुजु नियमित गर्न नमिल्ने भएमा बेरुजु फछ्र्यौटको लागि गाउँ विकास समितिलाई निर्देशन दिनेछ ।

## परिच्छेद-८

## दण्ड सजाय

७०. **दण्ड सजाय गर्न सक्ने**: (१) गाउँ विकास क्षेत्रभित्र कसैले देहायको कुनै काम गरेमा निजलाई गाउँ विकास समितिले देहायबमोजिम सजाय गर्न सक्नेछः-

(क) अर्कालाई अप्ठेरो पार्ने नियत राखी रुख लगाउने वा पर्खाल लगाउने वा घर, टहरा आदि निर्माण गर्ने जस्ता काम गरेमा गाउँ विकास समितिले सो हटाउन आदेश दिन सक्नेछ र त्यस्तो आदेशबमोजिम नहटाएमा गाउँ विकास समितिले सो हटाउन सक्नेछ। यसरी हटाउँदा लागेको खर्च अटेर गर्ने व्यक्तिसँग असुल गरी एक हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ।

(ख) अर्कालाई दुःख दिने नियतले बाधा अबरोध पुऱ्याउने गरी ढल निकास, चर्पि, सेफ्टी ट्यांकी बनाउने, राख्ने जस्ता कार्य गरेमा गाउँ विकास समितिले त्यस्तो कार्य रोक्न, भत्काउन वा हटाउन आदेश दिन सक्नेछ। सो आदेशबमोजिम रोक्न, भत्काउन वा हटाउन नमानेमा गाउँ विकास समितिले मानिस पठाई रोक्न, भत्काउन वा हटाउन सक्नेछ। गाउँ विकास समितिले यसरी भत्काउँदा वा हटाउँदा लागेको खर्च आदेश नमान्ने व्यक्तिबाट असुल गरी एक हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ।

(ग) गाउँ विकास क्षेत्रभित्र निर्दिष्ट स्थानमा फोहोर मैला नफाली जताततै फालेमा त्यस्तो फोहर मैला हटाउन लाग्ने खर्च समेत सम्बन्धित व्यक्तिबाट असुल गरी एक सय रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ।

(घ) गाउँ विकास समितिको इजाजत बेगर कसैले सार्वजनिक बाटो, गोरेटो, घोडेटो वा स्थान घेर्ने वा रोक्ने आवत जावतमा अवरोध खडा गर्ने काम गरेमा त्यस्तो घेरा, बार वा अवरोधका सामान हटाउन लगाई एक सयदेखि पाँचसय रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ।

(ङ) गाउँ विकास क्षेत्रभित्रका सार्वजनिक सम्पत्ति कसैले हानी नोक्सानी गरेमा वा अतिक्रमण वा अपचलन गरेमा वा सार्वजनिक संरचना बिगारेमा प्रचलित कानुनले सजाय तोकेकोमा सोहीबमोजिम र नतोकेकोमा पाँच हजार रुपैयाँसम्म जरिवाना गरी त्यस्तो हानी-नोक्सानीको बिगो सम्बन्धित व्यक्तिसित असुल उपर गर्न वा साविक अवस्थामा तयार गर्न लगाउन सक्नेछ ।

(च) गाउँ विकास क्षेत्रभित्रका सार्वजनिक जग्गामा कसैले अनधिकृत रूपले घर, टहरा आदि निर्माण गरेमा वा सार्वजनिक जग्गा मिची त्यस्तो निर्माण कार्य गरेमा गाउँ विकास समितिले त्यसरी निर्माण कार्य गर्ने व्यक्तिलाई पाँच हजार रुपैयाँसम्म जरिवाना गरी निर्माण गरेको घर, टहरा आदि भत्काउने आदेश दिन सक्नेछ । सो आदेश नमानेमा मानिस पठाई घर, टहरा आदि भत्काउन लगाउन सक्नेछ । गाउँ विकास समितिले यसरी भत्काउँदा लागेको खर्च सम्बन्धित व्यक्तिसँग असुल गरी लिन सक्नेछ ।

(छ) कसैले आफ्नो छिमेकीको घर, आँगन वा चोकमा फोहर मैला फालेमा वा वातावरण दुर्गन्धित हुने कार्य गरेमा गाउँ विकास समितिले खण्ड (ग) बमोजिम जरिवाना गरी फोहोर मैला हटाउन लगाउन सक्नेछ ।

(ज) गाउँ विकास क्षेत्रभित्र कुनै किसिमको यन्त्र जडान गरी वा कुनै उपकरण वा मनोरञ्जनका साधनद्वारा छरछिमेक वा समाजमा शान्ति भंग हुने कृयाकलाप गरेमा गाउँ विकास समितिले त्यस्तो कार्य नगर्न वा उपकरण हटाउन पर्नेमा हटाउने आदेश दिन सक्नेछ र सो आदेश नमानेमा सम्बन्धित व्यक्तिलाई पाँच सय रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

(झ) गाउँ विकास समितिले पसलहरूमा मूल्य सूची राख्ने आदेश दिन सक्नेछ र सोबमोजिम मूल्य सूची नराखेमा सम्बन्धित पसल धनीलाई पाँच सय रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

(ञ) छाडा चौपाया नियन्त्रण गर्न गाउँ विकास समिति वा वडाहरूमा काञ्जी हाउसको व्यवस्था गरी कानुनबमोजिम बिगोबाली समेत भराउन सक्नेछ ।

(२) गाउँ विकास समितिले ठेकेको वा लगाएको कर दस्तुर, शुल्क, महसुल तथा असुल गर्न बाँकी अन्य रकम कुनै व्यक्तिले नबुझाएमा गाउँ विकास समितिले पाँचसय रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ र गाउँ विकास समितिले उपलब्ध गराएको सेवा त्यस्तो व्यक्तिको हकमा बन्द गर्न सक्नेछ ।

(३) यो ऐन वा यस ऐन अन्तर्गत बनेका नियम, विनियम वा आदेशको उल्लंघन गरी कसैले कुनै काम गरेमा यस ऐनमा अन्यत्र दण्ड सजाय तोकिएकोमा सोहीबमोजिम र नतोकिएकोमा गाउँ विकास समितिले पाँच सय रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

(४) यस दफाअन्तर्गत सजाय पाइसकेकोमा पुनः सोही कसुर दोहोऱ्याएर गर्नेलाई गाउँ विकास समितिले पटकै पिच्छे दोब्बर सजाय गर्न सक्नेछ ।

(५) यस दफाबमोजिम गाउँ विकास समितिले गरेको सजायमा चित्त नबुझ्ने पक्षले निर्णय थाहा पाएको मितिले पैतीस दिनभित्र सम्बन्धित जिल्ला अदालतमा पुनरावेदन गर्न सक्नेछ ।

७१. **दण्ड जरिवानाको असुली:** दफा ७० बमोजिम गाउँ विकास समितिले गरेको दण्ड जरिवाना दफा २६० बमोजिमको प्रक्रिया अपनाई असुल उपर गरिनेछ ।

# भाग-३

# नगरपालिका सम्बन्धी व्यवस्था

## परिच्छेद-१

## नगर क्षेत्र, वडा विभाजन र वडा समिति

७२. **नगर क्षेत्र र केन्द्र तोक्ने**: (१) नेपाल सरकारले नेपालभित्रको कम्तीमा बीस हजार जनसंख्या भएको र बिजुली, सडक, खानेपानी र संचार व्यवस्था भएको कुनै क्षेत्रलाई चार किल्ला खोली नगर क्षेत्र तोक्न सक्नेछ ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि नेपाल सरकारले पहाडी र हिमाली क्षेत्रको कम्तीमा दश हजार जनसंख्या भएको र बिजुली, यातायात, खानेपानी र संचारको व्यवस्था भएको कुनै क्षेत्रलाई चार किल्ला खोली नगर क्षेत्र तोक्न सक्नेछ ।

(३) नेपाल सरकारले नगर परिषद्को परामर्शमा उपदफा (१) र (२) बमोजिम तोकिएको नगर क्षेत्रभित्रको पायक पर्ने स्थानलाई सो क्षेत्रको केन्द्र तोक्न सक्नेछ ।

(४) उपदफा (३) बमोजिम तोकिएको नगर क्षेत्रको केन्द्रमा नगर स्तरीय सबै कार्यालयहरू रहनेछन् ।

७३. **वडा विभाजन**: दफा ७२ बमोजिम तोकिएको नगर क्षेत्रलाई नेपाल सरकारले भौगोलिक अवस्थालाई समेत ध्यान दिई यथासंभव बराबर जनसंख्या पर्ने गरी कम्तीमा नौ वडामा विभाजन गर्नेछ ।

७४. **सिमाना हेरफेर**: (१) दफा ७२ बमोजिम तोकिएको कुनै नगर क्षेत्र वा दफा ७३ बमोजिम विभाजन गरिएको कुनै वडाको सिमाना हेरफेर गर्न आवश्यक परेमा नेपाल सरकारले सम्बन्धित विशेषज्ञ समेत रहेको समिति गठन गरी सो समितिको सिफारिशमा निर्वाचन आयोगको स्वीकृति लिई प्रतिनिधि सभाको सदस्यको निर्वाचनको लागि कायम भएको निर्वाचन क्षेत्रलाई असर नपर्ने गरी त्यस्तो नगर क्षेत्र वा वडाको सिमाना हेरफेर गर्न सक्नेछ ।

तर यसरी सिमाना हेरफेर गर्दा निर्वाचन हुने साल भन्दा एक वर्ष अगावै गरिसक्नु पर्नेछ ।

(२) कुनै नगर क्षेत्रको सिमाना हेरेफेर हुन आवश्यक छ भनी सम्वन्धित नगर परिषद्को दुई तिहाई बहुमतबाट प्रस्ताव पारित भै सम्वन्धित जिल्ला परिषद्ले सिफारिश गरेमा उपदफा (१) को अधिनमा रही नेपाल सरकारले सिमाना हेरफेर गर्न सक्नेछ ।

७५. **वडा समितिको गठनः** नगरपालिकाको प्रत्येक वडाका प्रचलित कानुनबमोजिम मतदाता हुन योग्यता पुगेका नेपाली नागरिकहरूले दफा ७८ बमोजिम नगर परिषद्को सदस्यको लागि चाहिने योग्यता पुगेका व्यक्तिहरूमध्येबाट निर्वाचित गरेका देहायबमोजिमको वडाध्यक्ष र वडा सदस्यहरू रहने गरी एक वडा समिति गठन हुनेछः-

(क) एकजना वडाध्यक्ष,

(ख) एकजना महिला वडा सदस्य, र

(ग) तीनजना वडा सदस्यहरू ।

## परिच्छेद-२

## नगर परिषद् सम्बन्धी व्यवस्था

७६. **नगर परिषद्को गठनः** (१) दफा ७२ बमोजिम तोकिएको नगर क्षेत्रमा एक नगर परिषद् गठन गरिनेछ ।

(२) नगर परिषद्मा देहायबमोजिमका सदस्यहरू रहनेछन्ः-

(क) नगरपालिकाका प्रमुख र उपप्रमुख,

(ख) प्रत्येक वडा समितिका वडाध्यक्ष, महिला वडा सदस्य र वडा सदस्यहरू,

(ग) नगरपालिका क्षेत्रभित्रका महिलासहित समाज सेवी, आर्थिक तथा सामाजिक दृष्टिकोणले पिछडिएका जाति, जनजाति, दलित तथा आदिवासी मध्ये नगर परिषद्मा प्रतिनिधित्व हुन नसकेका वर्गका दफा ७८ बमोजिम नगर परिषद्को सदस्यको लागि चाहिने योग्यता पुगेका व्यक्तिहरूमध्येबाट नगर परिषद्द्वारा मनोनीत कम्तीमा ६ जना र बढीमा बीस जना व्यक्तिहरू ।

तर त्यसरी मनोनीत हुने व्यक्तिहरू मध्ये कम्तीमा चालीस प्रतिशत व्यक्तिहरू महिला हुनुपर्नेछ ।

७७. **नगर परिषद्को सदस्यको पदावधिः** (१) नगर परिषद्को सदस्यको पदावधि पाँच वर्षको हुनेछ ।

(२) नगर परिषद्का सदस्यको पदावधि गणना गर्दा पदावधि शुरु हुने सालको श्रावण १ गतेदेखि गणना गरिनेछ र पाँच वर्षको पदावधि नबढाई प्रत्येक पाँचौ वर्षको आषाढ मसान्तमा पदावधि समाप्त भएको मानिनेछ ।

(३) उपदफा (१) र (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि यस दफाबमोजिम नगर परिषद्को सदस्यको पदावधि समाप्त हुनु अगावै नगर परिषद्को नयाँ सदस्यको लागि निर्वाचन सम्पन्न भएमा नगर परिषद्को साविकको सदस्यको पदावधि समाप्त भएको मनिनेछ र नगर परिषद्को नव निर्वाचित सदस्यहरूलाई नै कार्य सञ्चालन गर्ने अधिकार हुनेछ ।

(४) कुनै कारणवश निर्धारित समयमा कुनै नगरपालिका वा वडा समितिको सदस्य पदको निर्वाचन वा नगर परिषद्को सदस्यको मनोनयन हुन नसकी अरू समयमा भए पनि त्यस्तो सदस्यको पदावधि गणना गर्दा निर्धारित समयमा निर्वाचित वा मनोनीत भएसरह मानी पदावधिको गणना गरिनेछ ।

(५) कुनै नगर परिषद् सदस्यको पद कुनै कारणवश रिक्त हुन आएमा बाँकी अवधिको लागि मात्र सो रिक्त पदको पूर्ति निर्वाचित सदस्य पदको लागि प्रचलित कानुनबमोजिम उप-निर्वाचनद्वारा र मनोनीत सदस्य पदको लागि मनोनयनद्वारा गरिनेछ ।

तर-

(१) पद रिक्त भएको मितिले एक वर्षभित्र उप-निर्वाचन वा मनोनयन गरिसक्नु पर्नेछ ।

(२) एक वर्षभन्दा कम अवधिको लागि उप-निर्वाचन वा मनोनयन गरिने छैन ।

७८. **नगर परिषद्को सदस्यको लागि चाहिने योग्यताः** नगर परिषद्को सदस्य हुनको लागि देहायबमोजिमको योग्यता पुगेको हुनुपर्नेछः-

(क) नेपाली नागरिक भएको,

(ख) एक्काईस वर्ष उमेर पूरा भएको र प्रचलित कानुनबमोजिम मतदाता हुन योग्यता पुगेको,

(ग) नगरपालिकालाई बुझाउनु पर्ने सबै जिन्सी वा नगदी बुझाई सकेको,

(घ) नगरपालिकासँग ठेक्का पट्टा वा चल, अचल सम्पत्ति सम्बन्धी व्यवहारमा कुनै निजी स्वार्थ नभएको,

(ङ) सार्वजनिक सम्पत्ति हिनामिना गरेको नठहरेको,

तर, असुली भएको प्रमाण पेश गरेमा यो खण्ड लागू हुने छैन ।

(च) नैतिक पतन देखिने फौजदारी अभियोगमा सजाय पाएको भए त्यस्तो सजाय भुक्तान गरेको तीन वर्ष व्यतीत भएको,

(छ) कुनै कानुनले अयोग्य नभएको ।

७९. **नगर परिषद्को सदस्यता कायम नरहनेः** देहायको अवस्थामा नगर परिषद्को सदस्यता कायम रहने छैनः-

(क) दफा ७८ बमोजिमको योग्यता नभएमा,

(ख) आफू बसोबास गरिआएको वडा वा सोको भाग सम्बन्धित नगर क्षेत्रबाट झिकिएमा वा अन्य कुनै गाउँ विकास क्षेत्र वा नगरपालिकामा गाभिएमा ।

(ग) जिल्ला विकास समितिको सभापति, उप सभापति वा सदस्यको पदमा निर्वाचित भएमा वा जिल्ला परिषद्को सदस्यमा मनोनीत भएमा,

(घ) प्रतिनिधि सभा वा राष्ट्रिय सभाको सदस्यको निर्वाचनमा उम्मेदवार भएमा वा राष्ट्रिय सभाको सदस्यमा मनोनीत भएमा,

(ङ) मनासिव माफिकको सूचना नदिई लगातार तीन पटकसम्म नगर परिषद्को बैठकमा अनुपस्थित रहेमा,

तर त्यस्तो सदस्यलाई सफाइ पेश गर्ने मनासिव मौका नदिई निजको सदस्यता कायम नरहेको सूचना दिइने छैन ।

(च) दफा ७७ बमोजिमको पदावधि समाप्त भएमा,

(छ) प्रचलित कानुनबमोजिम भ्रष्टाचारको अभियोग वा नैतिक पतन देखिने फौजदारी अभियोग वा तीन वर्षभन्दा बढी कैद सजाय हुने फौजदारी अभियोगमा सजाय पाएमा,

(ज) राजीनामा दिएमा,

(झ) मृत्यु भएमा ।

## परिच्छेद-३

## नगरपालिका सम्बन्धी व्यवस्था

८०. **नगरपालिकाको गठनः** (१) दफा ७२ बमोजिम तोकिएको नगर क्षेत्रमा नगर परिषद्को कार्यकारिणीको रूपमा एक नगरपालिका गठन गरिनेछ ।

(२) नगरपालिकामा देहायबमोजिमका प्रमुख, उपप्रमुख र सदस्यहरू रहनेछन्ः-

(क) नगर क्षेत्रभित्रका प्रचलित कानुनबमोजिम मतदाता हुन योग्यता पुगेका नेपाली नागरिकहरूले निर्वाचन गरी पठाएका एकजना प्रमुख र एक जना उपप्रमुख,

(ख) नगर क्षेत्रको प्रत्येक वडाका प्रचलित कानुन बमोजिम मतदाता हुन योग्यता पुगेका नेपाली नागरिकहरूले आ-आफ्नो वडाबाट एक-एक जनाका दरले निर्वाचन गरी पठाएका वडाध्यक्षहरू ।

(ग) दफा ७६ को उपदफा (२) को खण्ड (ग) बमोजिमका नगर परिषद्का सदस्यहरूमध्येबाट एकजना महिलासहित नगरपालिकाद्वारा मनोनीत दुई जना सदस्यहरू ।

८१. **नगरपालिका स्वशासित र संगठित संस्था हुनेः** (१) प्रत्येक नगरपालिका एक अविच्छिन्न उत्तराधिकारवाला स्वशासित र संगठित संस्था हुनेछ ।

(२) नगरपालिकाको आफ्नो एउटा छुट्टै छाप हुनेछ ।

(३) नगरपालिकाले व्यक्तिसरह चल-अचल सम्पत्ति प्राप्त गर्न, उपभोग गर्न र बेचबिखन गर्न सक्नेछ ।

(४) नगरपालिकाले व्यक्तिसरह आफ्नो नामबाट नालिस उजूर गर्न र सो उपर पनि सोही नामबाट नालिस उजूर लाग्न सक्नेछ ।

८२. **सदस्यको पदावधिः** (१) नगरपालिकाको सदस्यको पदावधि पाँच वर्षको हुनेछ ।

(२) नगरपालिकाको सदस्यको पदावधि गणना गर्दा पदावधि शुरु हुने सालको श्रावण १ गतेदेखि गणना गरिनेछ र पाँच वर्षको पदावधि नबढाई प्रत्येक पाँचौ वर्षको आषाढ मसान्तमा पदावधि समाप्त भएको मानिनेछ ।

(३) उपदफा (१) र (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि यस दफाबमोजिम सदस्यको पदावधि समाप्त हुनु-अगावै नयाँ सदस्यको लागि निर्वाचन सम्पन्न भएमा साविकको सदस्यको पदावधि समाप्त भएको मानिनेछ र नवनिर्वाचित सदस्यलाई नै कार्य सञ्चालन गर्ने अधिकार हुनेछ ।

(४) कुनै कारणवश निर्धारित समयमा कुनै नगरपालिकाको सदस्य पदको निर्वाचन वा मनोनयन सम्पन्न हुन नसकी अरू समयमा सम्पन्न भए पनि निर्वाचित र मनोनीत सदस्यको पदावधि गणना गर्दा निर्धारित समयमा निर्वाचित वा मनोनीत भएसरह मानी पदावधिको गणना गरिनेछ ।

(५) कुनै नगरपालिका सदस्यको पद कुनै कारणवश रिक्त हुन आएमा बाँकी अवधिको लागि मात्र सो रिक्त पदको पूर्ति निर्वाचित सदस्य पदको लागि प्रचलित कानुनबमोजिम उप-निर्वाचनद्वारा र मनोनीत सदस्य पदको लागि मनोनयनद्वारा गरिनेछ ।

तर-

(१) पद रिक्त भएको मितिले एक वर्षभित्र उप-निर्वाचन वा मनोनयन गरिसक्नु पर्नेछ ।

(२) एक वर्षभन्दा कम अवधिको लागि उप-निर्वाचन वा मनोनयन गरिने छैन ।

**८३. शपथ ग्रहण गर्नुपर्नेः** (१) प्रमुखले जिल्ला न्यायाधीशसमक्ष, उपप्रमुख र सदस्यहरूले प्रमुखसमक्ष र प्रमुखको अनुपस्थितिमा उपप्रमुखले जिल्ला न्यायाधीशसमक्ष र सदस्यहरूले उपप्रमुखसमक्ष शपथ ग्रहण गर्नु पर्नेछ ।

(२) उपदफा (१) मा उल्लेख भएदेखि बाहेकका नगर परिषद्का अन्य सदस्यहरूले प्रमुखसमक्ष र प्रमुखको अनुपस्थितिमा उपप्रमुखसमक्ष शपथ ग्रहण गर्नु पर्नेछ ।

(३) उपदफा (१) वा (२) बमोजिम शपथ ग्रहण नगरी नगर परिषद् तथा नगरपालिकाका सदस्यहरूले पद ग्रहण गर्ने छैनन् ।

**८४. पद त्याग गर्न सक्नेः** (१) प्रमुखले उपप्रमुख मार्फत नगरपालिकासमक्ष र उपप्रमुख तथा सदस्यहरूले प्रमुखसमक्ष राजीनामा दिई पदत्याग गर्न सक्नेछन् ।

(२) उपदफा (१) मा उल्लेख भएदेखि बाहेक नगर परिषद्का अन्य सदस्यहरूले प्रमुखसमक्ष राजीनामा दिई पदत्याग गर्न सक्नेछन् ।

**८५. सदस्यको लागि चाहिने योग्यताः** नगरपालिकाको सदस्यमा निर्वाचित वा मनोनीत हुन देहायबमोजिमको योग्यता हुनु पर्नेछः-

(क) नेपाली नागरिक भएको,

(ख) एक्काईस वर्ष उमेर पूरा भएको र प्रचलित कानुनबमोजिम मतदाता हुन योग्यता पुगेको,

(ग) नगरपालिकालाई बुझाउनु पर्ने सबै जिन्सी वा नगदी बुझाइ सकेको,

(घ) नगरपालिकासँग ठेक्का पट्टा वा चल अचल सम्पत्ति सम्बन्धी व्यवहारमा कुनै निजी स्वार्थ नभएको,

(ङ) सार्वजनिक सम्पत्ति हिनामिना गरेको नठहरेको,

तर, असुली भएको प्रमाण पेश गरेमा यो खण्ड लागू हुने छैन ।

(च) नैतिक पतन देखिने फौजदारी अभियोगमा सजाय पाएको भए त्यस्तो सजाय भुक्तान गरेको तीन वर्ष व्यतीत भएको ।

(छ) अन्य प्रचलित कानुनले अयोग्य नभएको ।

८६. **सदस्यता कायम नरहने**: देहायको अवस्थामा नगरपालिकाको सदस्यता कायम रहने छैनः-

(क) दफा ८५ बमोजिमको योग्यता नभएमा,

(ख) आफू बसोबास गरिआएको वडा वा सो को भाग सम्बन्धित नगर क्षेत्रबाट झिकिएमा वा अन्य कुनै गाउँ विकास क्षेत्र वा नगर क्षेत्रमा गाभिएमा,

(ग) जिल्ला विकास समितिको सभापति, उपसभापति वा सदस्यको पदमा निर्वाचित भएमा वा जिल्ला परिषद्को सदस्यमा मनोनीत भएमा,

(घ) प्रतिनिधि सभा वा राष्ट्रिय सभाको सदस्यको निर्वाचनमा उम्मेदवार भएमा वा राष्ट्रिय सभाको सदस्यमा मनोनीत भएमा,

(ङ) मनासिब माफिकको सूचना नदिई लगातार तीन पटकसम्म नगरपालिकाको बैठकमा अनुपस्थित भएमा,

तर त्यस्तो सदस्यलाई सफाइ पेश गर्ने मनासिव मौका नदिई निजको सदस्यता कायम नरहेको सूचना दिइने छैन ।

(च) प्रचलित कानुनबमोजिम भ्रष्टाचारको अभियोग वा नैतिक पतन देखिने फौजदारी अभियोग वा तीन वर्षभन्दा बढी कैद सजाय हुने फौजदारी अभियोगमा सजाय पाएमा,

(छ) दफा ८२ बमोजिमको पदावधि समाप्त भएमा,

(ज) आफ्नो पदबाट राजीनामा दिएमा,

(झ) मृत्यु भएमा ।

**८७. सम्पत्ति विवरण सार्वजनिक गर्नुपर्नेः** सदस्यले दफा ८३ बमोजिम शपथ ग्रहण गरेको मितिले तीस दिनभित्र आफू र आफ्नो एकाघर सगोलका परिवारको सदस्यको नाममा रहेको चल अचल सम्पत्तिको विवरण सार्वजनिक गर्नु पर्नेछ ।

तर प्रमुख र उपप्रमुखले आफू पदबाट हटेपछि पनि पदबाट हटेको मितिले तीस दिनभित्र त्यस्तो सम्पत्तिको विवरण सार्वजनिक गर्नुपर्नेछ ।

**८८. नगरपालिकाको वर्गीकरणः** (१) दफा ८० बमोजिम गठित नगरपालिकाहरूलाई नेपाल सरकारले जनसंख्या, आयस्रोत र अन्य शहरी सुविधाको आधारमा देहायबमोजिम वर्गीकरण गर्न सक्नेछः-

(क) महानगरपालिका,

(ख) उपमहानगरपालिका,

(ग) नगरपालिका ।

(२) उपदफा (१) बमोजिम वर्गीकृत देहायका नगरपालिकामा देहायबमोजिमको जनसंख्या तथा शहरी सुविधा हुन पर्नेछः-

(क) **महानगरपालिकाः** कम्तीमा तीन लाख जनसंख्या भएको र न्यूनतम चालीस करोड रुपैयाँ वार्षिक आयस्रोत भई विद्युत, खानेपानी, संचारको सुविधा भएको, नगरको प्रमुख सडक साथै शाखा सडकहरू समेत पक्की भएको, स्वास्थ्य सेवासम्बन्धी विशिष्ठ प्रकृतिको सेवा उपलब्ध भएको, अन्तर्राष्ट्रिय खेलकुद कार्यक्रमका लागि आवश्यक पूर्वाधार भएको, उच्च शिक्षाका लागि विभिन्न विषयहरूमा पर्याप्त अवसरहरू भएको र कम्तीमा एउटा विश्वविद्यालय स्थापना हुनुको साथै अन्य यस्तै पर्याप्त शहरी सुविधा भएको र उपमहानगर पालिका भैसकेको ।

(ख) **उपमहानगरपालिकाः** कम्तीमा एक लाख जनसंख्या भएको र न्यूनतम दश करोड रुपैयाँ वार्षिक आयस्रोत भई विद्युत,

खानेपानी, संचारको सुविधा भएको, नगरका प्रमुख सडकहरूसमेत पक्की भैसकेको, उच्चस्तरीय शिक्षा तथा स्वास्थ्य सेवाको सुविधा भएको, राष्ट्रिय तथा अन्तर्राष्ट्रिय स्तरको खेलकुद कार्यक्रमका लागि सामान्य व्यवस्था भएको, सार्वजनिक उद्यानहरू र नगर सभागृहको व्यवस्था भएको र अन्य त्यस्तै आवश्यक शहरी सुविधा हुनुको साथै नगरपालिका भै सकेको ।

(ग) **नगरपालिका**: कम्तीमा बीस हजार जनसंख्या र न्यूनतम पचास लाख रुपैयाँ वार्षिक आय स्रोत तथा विद्युत, सडक, खानेपानी, संचार र अन्य त्यस्तै न्यूनतम शहरी सुविधा भएको अर्ध शहरी क्षेत्र ।

तर पहाडी र हिमाली क्षेत्रमा सडक सुविधा नभए तापनि कम्तीमा दश हजार जनसंख्या र न्यूनतम पाँच लाख रुपैयाँ वार्षिक आयस्रोत भए पुग्ने छ ।

(३) उपदफा (१) र (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि यस अघि कायम भइसकेका नगरपालिकाहरूलाई यस व्यवस्थाले असर पार्ने छैन ।

(४) कुनै नगरको ऐतिहासिक पुरातात्विक वस्तु र कला संस्कृति संरक्षण गर्न नेपाल सरकारले तोकिएको आधारमा सांस्कृतिक नगर समेत घोषणा गर्न सक्नेछ ।



## परिच्छेद-४

## बैठक र कार्य प्रणाली

८९. **वडा समितिको बैठक**: (१) वडा समितिको बैठक कम्तीमा महिनाको एक पटक बस्नेछ ।

(२) वडाध्यक्षले मिति, समय र स्थान तोकी वडा समितिको बैठक बोलाउनेछ ।

(३) वडा समितिको बैठकको अध्यक्षता वडाध्यक्षले गर्नेछ र निजको अनुपस्थितिमा बैठकमा उपस्थित वडा समितिका सदस्यहरूले आफूमध्येबाट छानेको सदस्यले वडा समितिको बैठकको अध्यक्षता गर्नेछ ।

(४) अध्यक्षता गर्ने व्यक्तिसहित तीनजना सदस्यको बहुमतले बैठकको निर्णय हुन सक्नेछ ।

(५) वडा समितिको बैठकसम्बन्धी अन्य कुरा वडा समिति आफैले निर्धारण गरेबमोजिम हुनेछ ।

९०. **नगर परिषद्को बैठक:** (१) नगर परिषद्को बैठक साधारणतया वर्षको दुईपटक बस्नेछ ।

(२) नगर परिषद्को बैठक नगरपालिकाको प्रमुखले बोलाउनेछ ।

(३) प्रत्येक वर्ष नगर परिषद्को बैठक सामान्यतया श्रावण मसान्त र पौष मसान्तभित्र बोलाउनु पर्नेछ ।

(४) नगर परिषद्को प्रत्येक बैठकमा उपस्थित सदस्यहरूले नगरपालिकाका सदस्यहरू बाहेक परिषद्का अन्य सदस्यहरूले आफूमध्येबाट छानेको सदस्यले नगरपरिषद्को बैठकको अध्यक्षता गर्नेछ ।

तर नगर परिषद्को बैठकमा अध्यक्षको छनौट हुनुभन्दा अघि नगर परिषद्का उपस्थित सदस्यहरू मध्ये उमेरको हिसाबले जेष्ठ सदस्यले सो बैठकको अध्यक्षता गर्नेछ ।

(५) नगरपालिकाको सचिवले नगर परिषद्को सचिवको काम गर्नेछ ।

(६) नगर परिषद्को बैठक बस्ने मिति, समय र स्थानको सूचना तथा विषय सूची बैठक बस्ने दिन भन्दा कम्तीमा पन्ध्र दिन अगावै नगरपालिकाको प्रमुखको निर्देशनमा सचिवले नगर परिषद्का सबै सदस्यहरूलाई पठाउनु पर्नेछ ।

(७) नगरपरिषद्को बैठकमा तत्काल कायम रहेको सदस्यसंख्याको ५० प्रतिशत सदस्यहरू उपस्थित भएमा बैठकको लागि गणपूरक संख्या पुगेको मानिनेछ ।

(८) गणपूरक संख्याको अभावमा नगर परिषद्को बैठक बस्न नसकेमा सात दिनको सूचना दिई अर्को बैठक बोलाउनु पर्नेछ । सो बैठकको गणपूरक संख्या एक तिहाई

हुनेछ। सो गणपूरक संख्या पनि पूरा हुन नसकेमा सो को भोलिपल्ट पुनः अर्को बैठक बोलाउनु पर्नेछ सो बैठकमा जतिसुकै सदस्य उपस्थित भए पनि बैठक सञ्चालन हुनेछ।

(९) नगर परिषद्का एक तिहाई सदस्यहरूले कुनै खास विषयमा छलफल गर्न बैठक बोलाई पाउँ भनी प्रमुखसमक्ष लिखित अनुरोध गरेमा त्यसरी अनुरोध गरेको मितिले तीस दिनभित्र नगर परिषद्को विशेष बैठक बोलाउनु पर्नेछ।

(१०) नगर परिषद्को बैठकमा निर्णय सचिवले प्रमाणित गर्नेछ।

(११) नगर परिषद्को बैठक सम्बन्धी अन्य कार्यविधि तोकिएबमोजिम हुनेछ।

९१. **नगरपालिकाको बैठकः** (१) नगरपालिकाको बैठक कम्तीमा महिनाको एक पटक बस्नेछ।

(२) प्रमुखको आदेश अनुसार सचिवले नगरपालिकाको बैठक बोलाउनेछ।

तर तीन महिनासम्म पनि प्रमुखले बैठक बोलाउने आदेश नदिएमा एक तिहाई सदस्यहरूको लिखित अनुरोधमा सचिवले नगरपालिकाको बैठक बोलाउनेछ।

(३) नगरपालिकाको बैठकको अध्यक्षता प्रमुखले गर्नेछ र निजको अनुपस्थितिमा उपप्रमुखले र उपप्रमुख पनि अनुपस्थित भएमा बैठकमा उपस्थित सदस्यहरूले आफू मध्येबाट छानेको सदस्यले बैठकको अध्यक्षता गर्नेछ।

(४) नगरपालिकाको बैठकमा तत्काल कायम रहेको सदस्य संख्याको पचास प्रतिशत सदस्यहरू उपस्थित भएमा बैठकको लागि गणपूरक संख्या पुगेको मानिनेछ।

(५) जिल्ला विकास समितिको सम्बन्धित इलाका सदस्यलाई नगरपालिकाको बैठकमा भाग लिनको लागि आमन्त्रण गर्नुपर्नेछ।

(६) नगरपालिकाको बैठकको निर्णय सचिवले प्रमाणित गर्नेछ।

(७) नगरपालिकाको बैठकसम्बन्धी अन्य कार्यविधि तोकिएबमोजिम हुनेछ।

९२. **बैठकको निर्णयः** (१) यस ऐनमा अन्यथा व्यवस्था भएकोमा बाहेक नगर परिषद् र नगरपालिकाको बैठकको निर्णय उपस्थित सदस्यहरूको बहुमतको आधारमा गरिनेछ।

तर दफा ९४ को उपदफा (१) को खण्ड (ख) र (ग) बमोजिमको प्रस्ताव सम्वन्धमा निर्णय गर्दा सम्पूर्ण सदस्य संख्याको बहुमतको आवश्यकता हुनेछ ।

(२) नगर परिषद् र नगरपालिकाको बैठकमा मत बराबर भएमा बैठकको अध्यक्षता गर्ने व्यक्तिले निर्णायक मत दिनेछ ।

९३. **वडा समितिको काम कर्तव्य र अधिकारः** नगरपालिका अन्तर्गतको प्रत्येक वडा समितिको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) वडाभित्रको जनसंख्या, घर, जग्गा, पाटी, पौवा, धर्मशाला, मठ, मन्दिर, गुम्वा, मस्जिद, देवस्थल, मदरसा, पर्ति जग्गा, पोखरी, तलाउ, इनार, कुवा, धारा, ढुँगेधारा आदिको लगत राख्न तथा संरक्षण गर्न नगरपालिकालाई सहयोग गर्ने ।

(ख) वडाभित्रको बाटो, सडक, पुल, ढल, पोखरी, तलाउ, इनार, कुवा, ढुँगेधारा, धारा, बहाल, मठ, मन्दिर, गुम्बा आदि सफा सुग्घर राख्ने ।

(ग) वडाभित्रको फोहर मैला र सडेगलेका वस्तुहरू फ्याँक्ने तथा चोक र गल्ली सफा राख्ने तथा सरसफाइको निमित्त वडाबासीहरूलाई अभिप्रेरित गर्ने प्रबन्ध गर्ने ।

(घ) वडाभित्रको नहर, कुलो, पैनी आदिको हेरबिचार गर्ने ।

(ङ) वडाभित्रको पर्ति जग्गा र डाँडा, भीर, पाखा आदिमा वृक्षारोपण गर्न र वातावरण संरक्षणमा सहयोग पुऱ्याउने ।

(च) वडामा स्वास्थ्य केन्द्र, स्वास्थ्यचौकी आदिको व्यवस्थापनमा सहयोग पुऱ्याउने ।

(छ) वडामा विद्यालय तथा पुस्तकालयको स्थापना र सञ्चालनमा सहयोग पुऱ्याउने ।

(ज) छाडा भई हिंडेका चौपायाहरू पक्राउ गरी सम्बन्धित निकायमा बुझाउने ।

(झ) वडाभित्रको गल्ली तथा सडकमा विजुली बत्तीको प्रबन्ध गर्ने ।

(ञ) वडा समितिको आय र व्ययको हिसाब तथा अन्य कागजातहरू सुरक्षित राख्ने ।

(ट) वडाभित्र सुपथ मूल्यमा खाद्यान्न तथा अन्य आवश्यक वस्तुको बिक्रीको लागि नगरपालिकालाई सहयोग पुऱ्याउने ।

(ठ) खेलकुद विकासको लागि खेलकुदका समानहरू वितरण गर्ने र भाषा संस्कृतिको विकासको लागि कला, नाटक तथा सांस्कृतिक कार्यक्रमहरूको आयोजना गर्न सहयोग गर्ने ।

(ड) वडामा असक्त बिरामी भएको बेवारिस वा असहाय व्यक्तिलाई नजिकको अस्पताल वा स्वास्थ्य केन्द्रमा पुऱ्याई औषधोपचार गराउने ।

(ढ) वडामा कुनै असहाय वा वेवारिस व्यक्तिको मृत्यु भएमा निजको दाह संस्कारको व्यवस्था मिलाउने ।

(ण) वडाका बालबालिकाहरूलाई बि.सि.जि., पोलियोको व्यवस्था गर्ने तथा सरुवा रोगको रोकथामको व्यवस्था गर्ने ।

(त) वडावासीहरूलाई व्यक्तिगत घटना दर्ता गर्न उत्प्रेरित गर्ने ।

(थ) नगरवासीहरूको चेतनास्तर उकास्न विभिन्न क्रियाकलाप गर्न सहयोग गर्ने ।

(द) पर्ती जग्गा संरक्षण गर्न सहयोग गर्ने ।

(ध) वडाभित्रका प्राचीन स्मारकहरूको संरक्षण गर्न सहयोग गर्ने ।

(न) वडाभित्रका ऐतिहासिक, पुरातात्विक, सांस्कृतिक तथा धार्मिक महत्वका मन्दिरहरूको संरक्षण गर्न सहयोग गर्ने ।

(प) मौलिकता झल्किने सांस्कृतिक नाचगान तथा भजन समेतलाई निरन्तरता दिन नगरपालिकालाई सहयोग गर्ने ।

(फ) वडाभित्रका पिछडिएका जनजाति, असहाय, अपांग तथा वेवारिस व्यक्तिहरूको संरक्षण र जिविकोपार्जन सम्वन्धी कार्यमा सहयोग पुऱ्याउने ।

(ब) सम्बन्धित नगरपालिकाले दिएको निर्देशन तथा आदेशबमोजिमको अन्य काम गर्ने ।

९४. **<u>नगर परिषद्को काम, कर्तव्य र अधिकार</u>**: (१) नगर परिषद्को काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) नगरपालिकाले पेश गरेको बजेट, योजना तथा कार्यक्रमहरू पारित गर्ने ।

(ख) नगरपालिकाले प्रस्ताव गरेका कर, दस्तुर, शुल्क आदि लगाउने तथा उठाउने सम्बन्धी प्रस्ताव पारित गर्ने ।

(ग) नगरपालिकाले प्रस्ताव गरेको ऋण लिने वा अचल सम्पत्ति बेचबिखन वा हस्तान्तरण गर्ने सम्वन्धी प्रस्ताव पारित गर्ने ।

(घ) नगरपालिकाको लेखापरीक्षण प्रतिवेदनबाट कायम भएका बेरुजुमाथि छलफल गरी प्रचलित कानुनबमोजिम नियमित गर्न नमिल्ने बेरुजुको हकमा बेरुजु फछ्र्यौटको लागि आवश्यक कारवाही गर्न नगरपालिकालाई निर्देशन दिने ।

(ङ) नगरपालिकाले आफ्नो आन्तरिक स्रोतबाट व्यहोरिने गरी प्रस्ताव गरेको कर्मचारीको दरवन्दी, पारिश्रमिक, भत्ता तथा अन्य सुविधामा आवश्यकताअनुसार स्वीकृति दिने ।

(च) नगरपालिकाको प्रशासनिक कार्यहरूको मूल्याङ्कन गरी नगरपालिकालाई आवश्यक निर्देशन दिने ।

(छ) नगर क्षेत्रभित्र संचालित विकास निर्माण कार्यहरूको मूल्याङ्कन गरी आवश्यक निर्देशन दिने ।

(ज) नगरपालिकाको विनियम स्वीकृत गर्ने ।

(झ) तोकिएको अन्य काम गर्ने ।

(२) नगर परिषद्ले नगर परिषद्को कुनै एक सदस्यको अध्यक्षतामा निजसहित बढीमा पाँच जना सदस्यहरू रहेको एक लेखा-समितिको गठन गर्नेछ, यस्तो समितिको काम, कर्तव्य र अधिकार तोकिएबमोजिम हुनेछ ।

(३) नगर परिषद्लाई विभिन्न विषयमा आवश्यक सल्लाह र सुझाव दिनको लागि उपदफा (२) बमोजिमको लेखा समितिमा रहने सदस्यहरू बाहेक नगर परिषद्का अन्य सदस्यहरूलाई तोकिएबमोजिमका विषयगत समितिहरूमा रहने गरी नगर परिषद्ले विभिन्न समितिहरू गठन गर्न सक्नेछ ।

(४) नगर परिषद्को अन्य काम, कर्तव्य र अधिकार तोकिएबमोजिम हुनेछ ।

९५. **सल्लाहकार समिति गठन गर्न सक्ने**: (१) नगरपालिकाले आवश्यक ठानेमा आफ्नो काममा सहयोग पुऱ्याउन समाजसेवी, बुद्धिजीवी, प्राविधिक ज्ञान सीप भएका तीनदेखि नौ जनासम्मको एक सल्लाहकार समिति गठन गर्न सक्नेछ ।

(२) सल्लाहकार समिति सम्बन्धी अन्य कुरा तोकिएबमोजिम हुनेछ ।

९६. **नगरपालिकाको काम, कर्तव्य र अधिकार**: (१) नगर परिषद्को निर्णय र निर्देशनहरू कार्यान्वयन गर्नु, गराउनुको अतिरिक्त नगरपालिकाले नगरपालिका क्षेत्रमा अनिवार्य रूपमा गर्नु पर्ने काम र कर्तव्य देहायबमोजिम हुनेछः-

(क) **अर्थ सम्बन्धी**:

(१) नगरपालिकाको वार्षिक बजेट, योजना र कार्यक्रमहरू तयार गरी नगर परिषद्मा पेश गर्ने ।

(२) आय र व्ययको लेखा र तत्सम्बन्धी अन्य कागजातहरू अद्यावधिक रूपमा राख्ने ।

(३) स्वीकृत बजेटको परिधिभित्र रही नगरपालिकाको निर्णय कार्यान्वयन गर्न रकम खर्च गर्ने ।

(४) नगर परिषद्ले स्वीकृत गरेको कर, दस्तुर, शुल्क आदि उठाउने ।

(ख) **भौतिक विकास सम्बन्धीः**

(१) नगरपालिका क्षेत्रको भू-उपयोग नक्सा बनाई औद्योगिक, आवासीय, कृषि, मनोरन्जन स्थल आदि क्षेत्र तोक्ने र कार्यान्वयन गर्ने, गराउने ।

(२) नगरपालिका क्षेत्रमा आवास योजना बनाई कार्यान्वयन गर्ने, गराउने ।

(३) नगरपालिका क्षेत्रमा खानेपानी र ढल निकास सम्बन्धी योजना कार्यान्वयन गर्ने तथा त्यसको सञ्चालन र मर्मत संभार गर्ने, गराउने ।

(४) नगरपालिका क्षेत्रभित्रका विभिन्न ठाउँहरूमा हरियो क्षेत्र, उद्यान र मनोरन्जन स्थलहरूको विकास गर्ने, गराउने ।

(५) नगरपालिका क्षेत्रका विभिन्न ठाउँहरूमा सार्वजनिक सौचालयको व्यवस्था गर्ने, गराउने ।

(६) नगरपालिका क्षेत्रमा निर्माण गरिने घर, भवन आदिको नक्सा पास गर्ने, गराउने ।

(७) सामुदायिक भवन तथा विश्राम गृह बनाउने ।

(ग) **जलस्रोत, वातावरण र सरसफाइ सम्बन्धीः**

(१) नगरपालिका क्षेत्रमा रहेका खोलानाला, कुवा, इनार, पोखरी, तलाउ, ढुँगेधारा आदिको संरक्षण गरी सदुपयोग गर्ने, गराउने ।

(२) नगरपालिका क्षेत्रमा सिंचाई योजना लागू गर्नु पर्ने भएमा त्यसको योजना बनाई कार्यान्वयन गर्ने, गराउने ।

(३) नगरपालिका क्षेत्रमा संभावित नदी, कटान, बाढी तथा भू-क्षय आदिको नियन्त्रण र रोकथाम गर्ने, गराउने ।

(४) नगरपालिका क्षेत्रमा हुने जल, वायु तथा ध्वनी प्रदूषण नियन्त्रण गरी वातावरण संरक्षण गर्ने कार्यमा सहयोग गर्ने, गराउने ।

(५) नगरपालिका क्षेत्रभित्रका वन, वनस्पति तथा अन्य प्राकृतिक सम्पदाको संरक्षण गर्ने, गराउने ।

(६) नगरपालिका क्षेत्रमा सरसफाईको कार्यक्रम सञ्चालन गर्ने, गराउने ।

(७) फोहर मैला संकलन, ढुवानी तथा तह लगाउने सम्बन्धी कामको सञ्चालन र व्यवस्थापन गर्ने, गराउने ।

(८) नगरपालिका क्षेत्रमा विद्युत उत्पादन तथा वितरण गर्ने, गराउने ।

(घ) **शिक्षा तथा खेलकूद विकास सम्बन्धीः**

(१) आफ्नो स्रोतबाट नगरपालिका क्षेत्रमा पूर्व-प्राथमिक विद्यालयहरू स्थापना, सञ्चालन र व्यवस्थापन गर्ने तथा स्थापना गर्न अनुमति दिने ।

(२) नगरपालिका क्षेत्रभित्र सञ्चालन भएका विद्यालयहरूको सञ्चालन र व्यवस्थापनमा सहयोग पुऱ्याउने र त्यस्ता विद्यालयहरूको स्थापना र खारेजीको सिफारिश गर्ने ।

(३) नगरपालिका क्षेत्रभित्र मातृभाषामा प्राथमिक तहको शिक्षा उपलब्ध गराउन सहयोग गर्ने ।

(४) आर्थिक दृष्टिले अत्यन्त पिछडिएका उत्पीडित जनजातिहरूका छात्र-छात्राहरूलाई छात्रवृत्ति दिने व्यवस्था मिलाउने ।

(५) नगरपालिका स्तरीय प्रौढ शिक्षा तथा अनौपचारिक शिक्षा सम्बन्धी कार्यक्रम तयार गरी कार्यान्वयन गर्ने, गराउने ।

(६) नगरपालिका क्षेत्रमा पुस्तकालय तथा वाचनालयको स्थापना, सञ्चालन तथा व्यवस्थापन गर्ने, गराउने ।

(७) खेलकूद विकास कार्यक्रमहरू बनाई कार्यान्वयन गर्ने, गराउने ।

(८) नगरपालिका स्तरीय खेलकूद विकास समिति गठन गरी खेलकूदको विकास गर्ने, गराउने ।

(ङ) **संस्कृति सम्बन्धीः**

(१) नगरपालिका क्षेत्रभित्रका सांस्कृतिक तथा धार्मिक महत्वका स्थानहरूको लगत तयार गरी तिनीहरूको मर्मत संभार गरी संरक्षण र सम्बर्द्धन गर्ने, गराउने ।

(२) नगरपालिका क्षेत्रभित्रका पुरातात्विक वस्तु, भाषा, धर्म, कला र संस्कृतिको संरक्षण, संवर्द्धन एवं प्रयोग गर्ने, गराउने ।

(च) **निर्माण तथा यातायात सम्बन्धीः**

(१) नगरपालिका क्षेत्रभित्र नेपाल सरकारको जिम्मामा रहेको सडकबाहेक आवश्यक पर्ने कच्ची, पक्की सडक, पुल, कलभर्टहरूको योजना बनाई निर्माण तथा मर्मत संभार गर्ने, गराउने ।

(२) नगरपालिका क्षेत्रभित्र बसपार्क, रिक्सा, टाँगा, ट्रक आदिको पार्किङ्ग व्यवस्था गर्ने, गराउने ।

(३) नगरपालिकाको यातायात आवश्यकतालाई विचार गरी ठेला, रिक्सा, टाँगा आदिको अधिकतम हद् तोक्ने र तिनीहरूलाई दर्ता गरी नम्बर दिने ।

(छ) **स्वास्थ्य सेवा सम्बन्धीः**

(१) नगरस्तरीय अस्पताल, आयुर्वेदिक औषधालय र स्वास्थ्य केन्द्रहरूको सञ्चालन र व्यवस्थापन गर्ने, गराउने ।

(२) नगरपालिका क्षेत्रभित्र स्वास्थ्य चौकी तथा उप-स्वास्थ्य चौकीहरू खोल्ने, सञ्चालन र व्यवस्थापन गर्ने, गराउने ।

(३) परिवार नियोजन, मातृशिशु कल्याण, विस्तारित खोप, पोषण, जनसंख्या शिक्षा र जनस्वास्थ्य सम्बन्धी कार्यक्रमहरूको तर्जुमा र कार्यान्वयन गर्ने, गराउने ।

(४) महामारी तथा संक्रामक रोगको रोकथामको व्यवस्था गर्ने, गराउने ।

(५) नगरपालिका क्षेत्रमा जनस्वास्थ्यको लागि हानिकारक चीजवस्तुको सार्वजनिक प्रयोगमा रोक लगाउने वा हटाउने ।

(६) जनस्वास्थ्यमा प्रतिकूल असर पर्ने किसिमका उपभोग्य वस्तुको बेचबिखन र उपभोगमा रोक लगाउने ।

(ज) **समाज कल्याण सम्बन्धी**:

(१) बेवारिस मृतक व्यक्तिको दाह संस्कारको व्यवस्था गर्ने, टुहुरा, असहाय तथा अनाथहरूको लागि अनाथलयको व्यवस्था गर्ने, गराउने ।

(२) महिला तथा बालबालिकाको हित र कल्याणसम्बन्धी कार्यक्रम सञ्चालन गर्ने तथा अनैतिक पेशा व्यापार नियन्त्रणसम्बन्धी कार्य गर्ने, गराउने ।

(झ) **उद्योग तथा पर्यटन सम्बन्धी**:

(१) नगरपालिका क्षेत्रमा घरेलु, साना तथा मझौला उद्योगको प्रवर्द्धनमा उत्प्रेरकको काम गर्ने, गराउने ।

(२) नगरपालिका क्षेत्रभित्रको प्राकृतिक, सांस्कृतिक तथा पर्यटकीय सम्पदाको संरक्षण, सम्बर्द्धन, विस्तार र सदुपयोग गर्ने, गराउने ।

(ञ) **विविधः**

(१) नगरपालिका क्षेत्रको सडकको दायाँ बायाँ र अन्य आवश्यक ठाउँमा वृक्षारोपण गर्ने ।

(२) कान्जी हाउस, पुशवधशाला राख्ने स्थानको निर्धारण र व्यवस्थापन गर्ने ।

(३) नगरपालिका क्षेत्रको ऐलानी तथा सरकारी पर्ति जग्गाहरूको संरक्षण गर्ने ।

(४) मसान घाटको निर्धारण र व्यवस्थापन गर्ने ।

(५) व्यापार तथा वाणिज्यको विकासको लागि काम गर्ने ।

(६) नगरपालिकाको विनियम तर्जुमा गरी नगर परिषद्मा पेश गर्ने ।

(७) दैवी प्रकोप नियन्त्रण गर्ने सम्बन्धमा आवश्यक काम गर्ने ।

(८) नगरपालिका क्षेत्रभित्रको जनसंख्या तथा घर जग्गाको लगत राख्ने ।

(९) प्रचलित कानुनबमोजिम जन्म, मृत्यु तथा अन्य व्यक्तिगत घटना दर्ता गर्ने ।

(१०) नगरपालिका क्षेत्रभित्रका असहाय, अनाथ र अपांग बालबालिकाहरूको लगत राख्ने र तिनीहरूलाई उपयुक्त ठाउँमा राख्ने व्यवस्था गर्ने ।

(११) बहुला तथा छाडा कुकुर मारी सार्वजनिक हितको सुरक्षा गर्ने र मरेका पशुपंक्षी गाड्ने ठाउँ तोक्ने ।

(१२) खतरा उत्पन्न गर्ने रुख काट्न लगाउने, घर पर्खाल आदि भत्काउन लगाउने ।

(१३) नगरपालिका क्षेत्रको घरको ब्लक नम्बर अद्यावधिक राख्ने ।

(१४) पशु बधशालाको प्रबन्ध गर्ने ।

(१५) छाडा पशु पक्राउ गरी लिलाम गर्ने ।

(१६) गल्ली तथा सडकमा बत्तीको व्यवस्था गर्ने ।

(१७) नगरपालिका क्षेत्रमा सिनेमा हल खोल्न स्वीकृति दिने ।

(१८) हाट, बजार मेला आदिको प्रबन्ध गर्ने, गराउने ।

(१९) बारुण यन्त्रको सञ्चालन र व्यवस्थापन गर्ने, गराउने ।

(२०) कुनै विशिष्ट व्यक्तिलाई नगरको सम्मानार्थ विशिष्ट व्यक्तिको रूपमा सम्मान प्रदान गर्ने ।

(२१) नगरपालिका क्षेत्रको विकास सम्बन्धी अन्य कामहरू गर्ने, गराउने ।

(२२) सहकारिताको विकासको लागि सहयोग पुऱ्याउने ।

(२३) सचिवको कार्यको मूल्यांकन गरी सिफारिशसहित अख्तियारवालासमक्ष पठाउने ।

(२४) नगरपालिकालाई आय-आर्जन हुने सहकारी, औद्योगिक तथा व्यवसायिक कार्यक्रम निजी क्षेत्रको समेत लगानीमा सञ्चालन गर्न प्रोत्साहित गर्ने, गराउने ।

(२५) सहकारितामा आधारित विविध कार्यक्रमहरू तर्जुमा गरी सञ्चालन गर्ने, गराउने ।

(२६) प्रचलित कानुनबमोजिम तोकिएका अन्य कामहरू गर्ने ।

(२) नगरपालिकाले उपदफा (१) बमोजिमका काम, कर्तव्यको अतिरिक्त नगरपालिका क्षेत्रमा देहायबमोजिमका ऐच्छिक कामहरू समेत गर्न सक्नेछः-

(क) नगरपालिका क्षेत्रभित्र स्तरयुक्त विद्यालय शिक्षा उपलब्ध गराउन आवश्यक व्यवस्था मिलाउने ।

(ख) नगरपालिका क्षेत्रबाट निरक्षरता निर्मूल पार्न साक्षरता कार्यक्रमहरू सञ्चालन गर्ने ।

(ग) नगरपालिका क्षेत्रका विभिन्न ठाउँहरूमा पुस्तकालय तथा वाचनालयहरू स्थापना गरी सञ्चालन गर्ने ।

(घ) नगरपालिका क्षेत्रभित्र अव्यवस्थित बसोबास नियन्त्रण गर्ने ।

(ङ) निर्देशित जग्गा विकास, भू-उपयोग जस्ता कार्यहरूको माध्यमबाट नगरको बनावट तथा विकासलाई व्यवस्थित तुल्याउने ।

(च) बृद्ध तथा अनाथ आश्रमहरूको व्यवस्था गर्ने ।

(छ) विद्युत आपूर्ति र संचार सुविधाको व्यवस्था मिलाउने ।

(ज) नगरपालिकामा मनोरन्जन स्थल, कृडास्थल, सँग्रहालय, चिडियाखाना, पार्क आदिको व्यवस्था मिलाउने ।

(झ) बेरोजगारी कम गर्न बेरोजगारहरूको तथ्यांक संकलन गरी रोजगारमूलक कार्यक्रमहरू सञ्चालन गर्ने ।

(ञ) नदी प्रदूषण नियन्त्रण गर्न कार्यक्रमहरू सञ्चालन गर्ने ।

(ट) नगरपालिका क्षेत्रमा एम्बुलेन्स सेवा उपलब्ध गराउने ।

(ठ) नगरपालिका क्षेत्रमा सव वाहनको व्यवस्था मिलाउने ।

(ड) दैवी प्रकोपबाट हुने धनजनको क्षती कम गर्न निरोधात्मक तथा उद्धारका कार्यहरू गर्ने ।

(३) नगरपालिका क्षेत्रमा गर्नु पर्ने विकास निर्माण कार्यको लागि उपभोक्ता समूह तथा अन्य गैर सरकारी संस्थाहरूलाई प्रोत्साहित गरी यथासंभव त्यस्ता समूह वा संस्थाहरू मार्फत गर्नु गराउनु पर्नेछ ।

(४) नगरपालिकाले यो ऐन तथा यस ऐन अन्तर्गत बनेको नियम तथा विनियमबमोजिम आफूलाई प्राप्त भएको अधिकारको प्रयोग गर्नेछ ।

१७. **प्रमुखको काम, कर्तव्य र अधिकारः** (१) प्रमुखको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) नगर परिषद् र नगरपालिकाको बैठक बोलाउने ।

(ख) नगर परिषद् र नगरपालिकाको बैठकमा आवश्यक प्रस्ताव र कागजात पेश गर्ने, गराउने ।

(ग) नगरपालिकाको आम्दानी, खर्चको हिसाब र अन्य कागजपत्रहरू सुरक्षित साथ राख्ने, राख्न लगाउने ।

(घ) नगरपालिकाको निर्णय कार्यान्वयन गर्ने, गराउने ।

(ङ) नगरपालिकाको दैनिक प्रशासनको रेखदेख र नियन्त्रण गर्ने, गराउने ।

(च) प्रचलित कानुनबमोजिम आवश्यक सिफारिश गर्ने ।

(छ) नगरपालिकाको चल अचल सम्पत्ति हेरबिचार तथा मर्मत संभार गर्ने, गराउने ।

(ज) नगरपालिकाको बजेट र योजना तर्जुमा गर्ने सम्बन्धमा आवश्यक व्यवस्था मिलाउने ।

(झ) उपप्रमुख र सदस्यहरूलाई विषयगत कार्य विभाजन गर्ने तथा उपप्रमुख, सदस्य तथा सचिवलाई काज खटाउने,

(ञ) सात दिनभन्दा बढी समय नगरपालिकामा उपस्थित हुन नसक्ने भएमा उपप्रमुखलाई कार्यभार दिने र उपप्रमुख पनि नभएमा उमेरको आधारमा जेष्ठ सदस्य वा अन्य कुनै सदस्यलाई कार्यभार दिने ।

(ट) वडासदस्यहरूको कामको बाँडफाँड गर्ने ।

(ठ) तोकिएको अन्य कामहरू गर्ने ।

(२) प्रमुखले मनासिब कारण बाहेक लगातार तीस दिनभन्दा बढी आफ्नो क्षेत्र छोड्न हुँदैन ।

(३) उपदफा (२) को प्रयोजनको लागि मनासिब कारण हो, होइन भन्ने प्रश्न उठेमा नगरपालिकाले निर्णय गर्नेछ ।

९८. **उपप्रमुखको काम, कर्तव्य र अधिकारः** (१) उपप्रमुखको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) प्रमुखको अनुपस्थितिमा कार्यबाहक भई काम गर्ने ।

(ख) तोकिएको अन्य कामहरू गर्ने ।

(२) उपप्रमुखले मनासिव कारण बाहेक लगातार तीस दिनभन्दा बढी आफ्नो क्षेत्र छोड्न हुँदैन ।

(३) उपदफा (२) को प्रयोजनको लागि मनासिव कारण हो, होइन भन्ने प्रश्न उठेमा नगरपालिकाले निर्णय गर्नेछ ।

९९. **सदस्य र वडासदस्यको काम, कर्तव्य र अधिकारः** (१) सदस्यको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) आफ्नो वडाको विकास-निर्माणको योजना तयार गरी नगरपालिकामा पेश गर्ने ।

(ख) विकास निर्माणको कार्य बारे छलफल गरी उपभोक्ता समूह र गैर सरकारी संस्थाबाट संभाव्य आयोजना नगरपालिकामा पठाउने प्रबन्ध गर्ने ।

(ग) वडा सम्बन्धी विवरण माग भएमा नगरपालिकामा पेश गर्ने ।

(घ) उपभोक्ता समूह र अन्य गैर सरकारी संस्थालाई आयोजना छनौट र आयोजना तर्जुमा गर्न सहयोग गर्ने ।

(ङ) प्रचलित कानुनबमोजिम आवश्यक सिफारिश गर्ने ।

(च) आपूर्ति व्यवस्था मिलाउन सहयोग गर्ने ।

(छ) सात दिनभन्दा बढी समय वडा समितिमा उपस्थित हुन नसक्ने भएमा ऐनको दफा ७५ खण्ड (ख) र (ग) बमोजिमका सदस्यहरूमध्ये उमेरका आधारमा जेष्ठ सदस्यलाई कार्यभार दिने ।

(ज) तोकिएका अन्य कामहरू गर्ने ।

(२) सदस्यले मनासिव कारण बाहेक लगातार तीस दिनभन्दा बढी आफ्नो क्षेत्र छोड्न हुँदैन ।

(३) उपदफा (२) को प्रयोजनको लागि मनासिव कारण हो, होइन भन्ने प्रश्न उठेमा नगरपालिकाले निर्णय गर्नेछ ।

(४) वडा सदस्यको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) वडाभित्रको जनसंख्या, घरजग्गा, पाटी पौवा, धर्मशाला, मठ-मन्दिर, मस्जिद, गुम्बा, देवस्थल, मदरसा, पर्ती जग्गा, पोखरी तलाउ, इनार, कुवा, धारा ढुंगेधारा आदि धार्मिक तथा अन्य प्राकृतिक एवं सांस्कृतिक महत्वका सार्वजनिक चीज, वस्तु र स्थानको स्रोत नक्शा तयार गर्ने काममा वडासमितिलाई सहयोग गर्ने ।

(ख) वडा समितिको वार्षिक कार्यक्रम र कार्ययोजना बनाउन र तयार भएका कार्यक्रम र कार्ययोजना लागू गर्न वडा समितिलाई सहयोग गर्ने ।

(ग) वडाभित्र मापदण्डअनुसार निर्माणसम्बन्धी काम भएनभएको सम्बन्धमा वडा समितिमा जानकारी दिने ।

(घ) वडाभित्र ठेक्का वा उपभोक्ता समिति वा अमानतबाट सञ्चालित विकास निर्माणसम्बन्धी कामको रेखदेख तथा अनुगमन गरी वडा समितिमा जानकारी दिने ।

(ङ) नगरपरिषद्ले अनुमोदन गरेबमोजिम नगरपालिकाले लगाएको कर, दस्तुर, शुल्क, महशुल, सेवा शुल्क असुलउपर गर्ने काममा सहयोग गर्ने ।

(च) वडाभित्रका सार्वजनिक महत्वका स्थलहरू सरसफाइ गर्न र सार्वजनिक सडक, चोक, गल्ली सफा गर्ने काममा वडासमितिलाई सहयोग पुऱ्याउने ।

(छ) छाडा चौपाया एवं रेविज रोग र अन्य यस्तै संक्रामक रोग नियन्त्रण गर्न वडासमितिलाई सहयोग पुऱ्याउने, र

(ज) तोकिएबमोजिम अन्य कार्यहरू गर्ने ।

१००. **सचिवको काम, कर्तव्य र अधिकार:** सचिवको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) प्रमुखको निर्देशनमा नगरपालिकाको सम्पूर्ण प्रशासनिक कामकारबाही गर्ने ।

(ख) प्रमुखको निर्देशनमा स्वीकृत नगर विकास कार्यक्रमको कार्यान्वयन गर्ने ।

(ग) नगरपालिका अन्तर्गत निर्माण हुने खर्चको हिसाब राखी सो निर्माणको हिसाब फरफारक गर्न पेश गर्ने ।

(घ) उपभोक्ता समूह, गैर सरकारी संस्था वा अन्य निकायबाट सम्पन्न आयोजनाको अभिलेख दुरुस्त राख्ने ।

(ङ) नगरपालिकाको आय र व्ययको हिसाब राख्ने ।

(च) नगरपालिकाको स्वीकृत बजेटको परिधिभित्र रही निर्णय कार्यान्वयन गर्नको लागि खर्च गर्ने ।

(छ) नगरपालिकाको हिसाबको लेखापरीक्षण गराउने, बेरुजु फछ्र्यौट गराउने र बेरुजु रकम कानुनबमोजिम असुल उपर गर्ने, गराउने ।

(ज) नगरपालिकाको चल अचल सम्पत्तिको जिन्सी लगत राख्ने र संरक्षण गर्ने ।

(झ) नेपाल सरकारबाट खटी आएका र नगरपालिकाका सम्पूर्ण कर्मचारीहरूको रेखदेख र नियन्त्रण गर्ने ।

(ञ) नगरपालिकाको बैठकमा उपस्थित हुने र आवश्यक परेको काम गर्ने, गराउने ।

(ट) नगरपालिकामा दायर भएका मुद्दाको मिसिल जिम्मा लिने सम्बन्धमा आवश्यक व्यवस्था मिलाउने ।

(ठ) जन्म, मृत्यु तथा अन्य व्यक्तिगत घटना दर्ता गरी नगरपालिका क्षेत्रभित्रको जनसंख्याको लगत दुरुस्त राख्ने वा राख्न लगाउने ।

(ड) नगर परिषद् र नगरपालिकाको बैठकमा उपस्थित भई निर्णयको माइन्यूटिङ्ग गर्ने, निर्णय पुस्तिका जिम्मा लिने र निर्णय प्रमाणित गर्ने ।

(ढ) नगरपालिकाअन्तर्गत कर्मचारीहरूको प्रशासनिक नियन्त्रण गर्ने ।

(ण) प्रचलित कानुनबमोजिम तोकिएका अन्य कामहरू गर्ने ।



## परिच्छेद-५

## नगरपालिकाको न्यायिक अधिकार

१०१. **न्यायिक अधिकार**ः नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकेको मितिदेखि नगरपालिका क्षेत्रभित्रको देहायका मुद्दाहरूको शुरु कारबाही र किनारा गर्ने अधिकार नगरपालिकालाई हुनेछः-

(क) जग्गा तर्फ साँध सीमाना, सन्धि सर्पन, आलीधुर, बाँध पैनी, कुलो वा पानीको बाँडफाँड तथा बाटो वा निकास मिचेको मुद्दा,

(ख) बाली अर्मल मुद्दा,

(ग) वेठवेगर सम्बन्धी र ज्याला मजुरीको महल अन्तर्गतको मुद्दा,

(घ) गरीब कंगालको महलअन्तर्गतको मुद्दा,

(ङ) चौपाया हराउने र पाउनेको महल अन्तर्गतको मुद्दा,

(च) घर बनाउनेको महलको ८ नं. र ९ नं अन्तर्गतको मुद्दा,

(छ) कल्याण धनको महल अन्तर्गतको मुद्दा,

(ज) नासो धरौटको महलको ५ नं. अन्तर्गतको मुद्दाबाहेक सो महल अन्तर्गतको अन्य मुद्दा,

(झ) अंशबण्डाको महलको १० नं. अन्तर्गतको इज्जत आमदअनुसार खान लाउन दिनुपर्ने विषयको मुद्दा,

(ञ) पानी घाटको प्रयोग तथा सार्वजनिक सम्पत्तिको सुरक्षा सम्बन्धी मुद्दा,

(ट) गोवध बाहेक चौपायाको महल अन्तर्गतको अन्य मुद्दा,

(ठ) चरन, घाँस, दाउरा सम्बन्धी मुद्दा,

(ड) अर्काको घरभित्र जवर्जस्ती पसेको, बसेको वा पस्न, बस्न खोजेको मुद्दा,

(ढ) सरकारी मुद्दासम्बन्धी ऐन, २०४९ को अनुसूची १ र अनुसूची २ मा उल्लेखित मुद्दा बाहेक नेपाल सरकारले नगरपालिकालाई नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकी दिएका अन्य मुद्दा ।

**१०२. <u>मध्यस्थ समितिको गठनः</u>** (१) दफा १०१ बमोजिम नगरपालिकामा दायर भएका मुद्दाको कारबाही तथा किनारा गर्न नगरपालिकाले मध्यस्थ समिति गठन गर्नेछ ।

(२) उपदफा (१) बमोजिम नगरपालिकाले मध्यस्थ समिति गठन गर्दा दफा १०३ बमोजिमको मध्यस्थहरूको सूचीमा रहेका व्यक्तिहरूमध्ये मुद्दाका पक्षहरूको सहमति भएका तीन जना व्यक्तिलाई मध्यस्थमा नियुक्ति गर्नेछ ।

(३) उपदफा (२) बमोजिम मध्यस्थहरूको सूचीमा रहेका व्यक्तिहरूमध्येबाट मध्यस्थ नियुक्ति गर्न मुद्दाका पक्षहरूको सहमति हुन नसकेमा मुद्दाका पक्षहरूले आ-

आफ्नो तर्फबाट एक-एक जना मध्यस्थ नियुक्ति गरी त्यसको नाम नगरपालिकामा दिनु पर्नेछ। त्यसरी दुई जना मध्यस्थको नाम प्राप्त भएपछि नगरपालिकाले दफा १०३ बमोजिमको मध्यस्थहरूको सूचीमा रहेका व्यक्तिहरू मध्येबाट अर्को एक जना मध्यस्थ नियुक्त गर्नेछ।

(४) उपदफा (२) बमोजिम मध्यस्थको नियुक्तिमा मुद्दाका पक्षहरूको सहमति हुन नसकेमा वा उपदफा (३) बमोजिम मुद्दाका पक्षहरूले आ-आफ्नो तर्फबाट एक एक जना मध्यस्थको नाम नपठाएको अवस्थामा नगरपालिकाले दफा १०३ बमोजिमको मध्यस्थहरूको सूचीमा रहेका संभव भएसम्म सम्बन्धित वडाका तीन जना व्यक्तिलाई मध्यस्थ नियुक्त गर्नेछ।

(५) उपदफा (२), (३) वा (४) बमोजिम मध्यस्थमा नियुक्ति भएका मध्यस्थहरू मध्येबाट एक जनालाई प्रमुखले मध्यस्थ समितिको अध्यक्ष तोक्नेछ।

**१०३. <u>मध्यस्थहरूको सूची</u>:** (१) यस ऐन अन्तर्गत दायर भएका मुद्दाको शुरु कारबाही र किनारा गर्ने प्रयोजनका लागि नगरपालिकाले नगरपालिका गठन हुनासाथ स्थानीय व्यक्ति, सामाजिक कार्यकर्ता, कानुनविद्‌मध्येबाट उपयुक्त देखिएका व्यक्तिहरूको सहमति लिई तिनीहरूको नाम, थर र वतन समेत खुलाई मध्यस्थहरूको सूची तयार गरी सार्वजनिक जानकारीको लागि नगरपालिकाको कार्यालयमा प्रकाशन गरी राख्नु पर्नेछ।

(२) उपदफा (१) बमोजिम मध्यस्थहरूको सूची तयार गर्दा यथासंभव नगरपालिकाका सबै वडाबाट प्रतिनिधित्व हुने गरी गर्नु पर्नेछ।

(३) उपदफा (१) बमोजिमको मध्यस्थहरूको सूचीमा यथासंभव महिला तथा पिछडिएका वर्गलाई समेत समावेश गर्नु पर्नेछ।

**१०४. <u>अधिकारक्षेत्रको प्रयोग</u>:** (१) मध्यस्थको अधिकारक्षेत्रको प्रयोग तीन जना मध्यस्थले सामूहिक रूपले गर्नेछन् र बहुमतको राय मध्यस्थको निर्णय मानिनेछ।

(२) उपदफा (१) बमोजिम मध्यस्थहरूको बीचमा बहुमत नभई अलग-अलग राय भएमा ती रायहरू उल्लेख गरी नगरपालिकासमक्ष पेश गरिनेछ र उक्त विषयमा नगरपालिकाले समर्थन गरेको राय नै मान्य हुनेछ।

**१०५. निर्णय गर्ने प्रक्रियाः** (१) मध्यस्थले आफूसमक्ष पेश भएको मुद्दामा यथासंभव सम्बन्धित पक्षहरूको बीच वार्ता गराई मिलापत्र गराउनेछ ।

(२) उपदफा (१) बमोजिम मिलापत्र गराउन नसकेमा त्यस्तो मुद्धामा मध्यस्थले दफा १०४ बमोजिम आफ्नो अधिकारको प्रयोग गरी निर्णय गर्नेछ ।

**१०६. मुद्दाको लगत काट्ने**ः दफा १०५ बमोजिम मिलापत्र वा निर्णय भएकोमा सो मिलापत्र वा निर्णयमा नगरपालिकाले आफ्नो छाप लगाई आफ्नो अभिलेखमा राखी नगरपालिकामा दायर भएको उक्त मुद्धाको लगत कट्टा गर्नु पर्नेछ ।

**१०७. मुद्दा सम्बन्धी कार्य प्रणालीः** यस ऐनबमोजिम नगरपालिकाबाट शुरु कारबाही र किनारा हुने मुद्दाहरू दायर गर्ने प्रक्रिया, त्यस्तो मुद्दासम्बन्धी जाँचबुझ तथा कारबाहीको तरिका, म्याद तामेल गर्ने विधि, पक्षहरू उपस्थित गराउने प्रक्रिया, म्याद तारिखको व्यवस्था, मुद्दा छिन्नु पर्ने अवधि, मिलापत्र वा निर्णय गर्दाको कार्यप्रणाली तोकिएबमोजिम हुनेछ ।

**१०८. पुनरावेदन गर्न सक्ने अधिकार**ः दफा १०५ को उपदफा (२) बमोजिम भएको निर्णयमा चित्त नबुझ्ने पक्षले निर्णय सुनी पाएको वा थाहा पाएको मितिले पैंतीस दिनभित्र सम्बन्धित जिल्ला अदालतमा पुनरावेदन गर्न सक्नेछ ।

**१०९. निर्णयको कार्यान्वयनः** (१) नगरपालिकाको आफ्नो अधिकारक्षेत्र अन्तर्गतका मुद्दा-मामिलाको सम्बन्धमा भएको मिलापत्र वा निर्णयबमोजिम पक्षहरूले तिर्न बुझाउन पर्ने दायित्व पूरा गर्न मञ्जुर गरेमा नगरपालिकाले तत्काल मिलापत्र वा निर्णयको कार्यान्वयन गर्नु गराउनु पर्नेछ ।

(२) कुनै पक्षले मिलापत्र वा निर्णयबमोजिम तिर्न बुझाउन पर्ने दायित्व पूरा नगरेको अवस्थामा नगरपालिकाले त्यसरी तिर्न बुझाउन पर्ने दायित्वको विवरणसहितको लगत सम्बन्धित मालपोत कार्यालयमा पठाउनु पर्नेछ ।

(३) उपदफा (२) बमोजिम लेखी आएमा मालपोत कार्यालयले प्रचलित कानुनबमोजिम रीत पुर्‍याई मिलापत्र वा निर्णयको कार्यान्वयन गरिदिनु पर्नेछ ।

**११०. मुद्दा सर्ने**ः नगरपालिका ऐन, २०४८ बमोजिम गठित नगरपालिकासमक्ष रहेका मुद्दा वा उजूरी यस ऐनबमोजिम गठित नगरपालिकामा सर्नेछ ।

## परिच्छेद-६

## नगरपालिकाको योजना तर्जुमा र कार्यान्वयन प्रक्रिया

१११. **नगरपालिकाको योजनाको तर्जुमाः** (१) प्रत्येक नगरपालिकाले नगरपालिका क्षेत्रको विकासका लागि आवधिक र वार्षिक विकास योजना तर्जुमा गर्नु पर्नेछ ।

(२) नगरपालिकाले योजना तर्जुमा गर्दा नगरको विकास सन्तुलित र नियोजित तुल्याउन आवश्यकता अनुसार भू-उपयोग, भू-एकीकरण र निर्देशित जग्गा विकास जस्ता योजना सञ्चालन गर्नु पर्नेछ ।

(३) उपदफा (१) र (२) बमोजिम योजना तर्जुमा गर्दा नगरपालिकाले आवश्यकता अनुसार वाह्यपरामर्श सेवा प्राप्त गर्न सक्नेछ ।

(४) नगरपालिकाले योजनाको तर्जुमा गर्दा देहाय बमोजिमका आयोजनालाई प्राथमिकता दिनु पर्नेछः-

(क) उत्पादनमूलक तथा छिटो प्रतिफल प्राप्त गर्न सकिने ।

(ख) नगरका जनताको जीवनस्तर, आम्दानी र रोजगार बढाउने तथा प्रत्यक्ष लाभ हुने र गरिवी निवारणमा सहयोग पुर्‍याउने ।

(ग) कम लागत तथा बढी जनसहभागितामा सञ्चालन हुने ।

(घ) स्थानीय साधन स्रोत तथा शीपबाट सञ्चालन हुने ।

(ङ) महिला एवं पिछडिएका वर्ग तथा बालबालिकालाई प्रत्यक्ष लाभ हुने ।

(च) वातावरणीय संरक्षण तथा सम्बर्द्धन गर्न सघाउ पुर्‍याउने ।

(५) आगामी वर्ष सञ्चालन हुने योजनाको तर्जुमा गर्न चालु वर्षमा देहायबमोजिम गर्नु पर्नेछः-

(क) प्रत्येक वर्षको मार्ग महिनासम्ममा नगरपालिकाले नेपाल सरकार, जिल्ला विकास समिति तथा अन्य सम्बन्धित निकायहरूबाट आगामी आर्थिक वर्षको निमित्त मार्गदर्शन तथा स्रोत-साधनको पूर्व-अनुमान प्राप्त गर्नु पर्नेछ। नगरपालिका आफैंले पनि आगामी आर्थिक वर्षको सेवा तथा विकास कार्यक्रम तर्जुमाको निमित्त विभिन्न वडा समितिमा आयोजना छनौट तथा कार्यक्रम तर्जुमासम्बन्धी मागदर्शन उपलब्ध गराउनु पर्नेछ ।

(ख) नगरपालिका क्षेत्रका वडा समितिहरू, उपभोक्ता समितिहरू र गैरसरकारी संस्थाबाट आयोजनाहरू माग गरी सोको आधारमा योजना तर्जुमा गर्नु पर्नेछ ।

(६) आवधिक योजना तर्जुमा गर्दा निम्न विषय समावेश गर्नु पर्नेछः-

(क) नगरको भौगोलिक, आर्थिक एवं प्राकृतिक सम्पदाहरू र तिनीहरूको वर्तमान उपयोग ।

(ख) विभिन्न क्षेत्रमा तुलनात्मक लागत लाभको हिसाबले उत्पादन गर्न सकिने संभावनाहरू ।

(ग) पिछडिएका जात जातिहरू एवं गरीबी भएको क्षेत्र तथा त्यस क्षेत्रमा गरिएका वा गरिनु पर्ने विभिन्न विकास कार्यहरू ।

(घ) महिला र बालबालिकाको लागि आयमूलक र सीपमूलक कार्यहरू ।

(ङ) सम्पन्न भएका विभिन्न विषय क्षेत्र अन्तर्गतका आयोजनाहरूको विवरण र तिनीहरूको सञ्चालन तथा संभार सम्बन्धी व्यवस्था ।

(च) विकासका संभावनाका आधारमा विभिन्न विषय क्षेत्रगत अल्पकालीन एवं दीर्घकालीन विकास कार्यहरू ।

(छ) स्थानीय बासिन्दाबाटै तयार गरिनु पर्ने विभिन्न विषय क्षेत्रका जनशक्ति विकास सम्बन्धी योजना ।

(७) वार्षिक योजना तर्जुमा गर्दा निम्न कुरालाई आधार लिनु पर्नेछः-

(क) राष्ट्रिय विकास नीति सम्बन्धमा राष्ट्रिय योजना आयोग र जिल्ला विकास समितिबाट प्राप्त निर्देशनहरू ।

(ख) आवधिक योजनाले परिलक्षित गरेका समष्टिगत आवश्यकताहरू ।

(ग) वडा समितिबाट प्राप्त सुझावहरू ।



११२. **स्रोत नक्सा तयार गर्ने**: प्रत्येक नगरपालिकाले नगरपालिका क्षेत्रको विकासका निमित्त नगरस्तरीय वस्तुगत तथ्यांक संकलन गरी नगरको वस्तुस्थिति देखिने गरी स्रोत नक्सा तयार गर्नु पर्नेछ ।

११३. **आयोजनाको सम्भाव्यता अध्ययन गर्नु पर्ने**: नगरपालिकाले नगरपालिकाको योजना कार्यान्वयन गर्ने क्रममा देहायबमोजिमका कुराहरू समेत खुलाई आयोजनाको सम्भाव्यता अध्ययन गर्नु गराउनु पर्नेछः-

(क) आयोजनाको लक्ष्य,

(ख) आयोजनाबाट फाइदा पाउने जनताको संख्या र फाइदाको किसिम,

(ग) छनौट गर्न लागिएको आयोजना नयाँ हो वा अधुरो हो,

(घ) आयोजना सञ्चालन नगरी अन्य कुनै उपायबाट समस्या समाधान हुन्छ, हुँदैन,

(ङ) आयोजना सम्पन्न गर्दा लाग्न सक्ने खर्च तथा सामग्रीको मूल्य तथा लाग्ने समयको अनुमान,

(च) उपभोक्ताहरूबाट प्राप्त हुन सक्ने नगद, वस्तुगत श्रम र त्यस्तै अन्य योगदान,

(छ) उपभोक्ताबाट उठ्न सक्ने शुल्क वा मर्मत सम्भार खर्च, सञ्चालन व्यवस्था, र

(ज) अन्य खुलाउनु पर्ने कुनै कुरा भए सो ।

**११४. आयोजनाको छनौटः** (१) आयोजनाको छनौट गर्दा दफा ११२ बमोजिमको स्रोत नक्शा तथा दफा ११३ बमोजिमको आयोजनाको संभाव्यता अध्ययन प्रतिवेदनको आधारमा गर्नु पर्नेछ ।

(२) आयोजना छनौट गर्दा वातावरण संरक्षण तथा सम्बर्द्धन गर्ने किसिमले आयोजनाको छनौट गर्नु पर्नेछ ।

(३) आयोजना छनौट गर्दा बढी भन्दा बढी स्थानीय वासिन्दाहरूको सहभागिता र श्रम प्राप्त हुने आयोजनाहरू छनौट गर्नु पर्नेछ ।

(४) नगरपालिकालाई प्राप्त हुने अनुदानको अनुमान प्राप्त भएपछि प्राथमिकताको आधारमा आयोजना छनौट गर्नु पर्नेछ ।

(५) छनौट भएका आयोजनाको जानकारी नगरवासीहरूबीच सार्वजनिक गराउनु पर्नेछ ।

**११५. नगरपालिका, सरकारी एवं गैरसरकारी निकायहरू बीच समन्वय गर्नेः** नगरपालिकाले नगरपालिकाको योजना र सेवा कार्यक्रम तर्जुमा गर्दा नगरपालिका क्षेत्रमा विभिन्न सेवा र विकास कार्यक्रमहरू कार्यान्वयन गर्ने सरकारी, गैह्रसरकारी तथा दातृ संस्थासँग देहायका विषयमा समन्वय कायम गर्नु पर्नेछः-

(क) कुनै पनि सेवाका क्षेत्रमा गरिने लगानीमा नगरपालिका र सम्बन्धित निकाय बीच दोहोरोपन हटाउने ।

(ख) लगानीकर्ताहरू बीच आपसमा परिपूरक समन्वय कायम गर्ने ।

(ग) दुबैको कार्यविधिमा उपभोक्ताहरूको भूमिका मुख्य रूपले कायम गर्ने ।

(घ) लगानीबाट नगरबासीहरूले अधिकतम लाभ हासिल गर्न सक्ने तरिका अपनाउने ।

(ङ) विभिन्न कार्यक्रम कार्यान्वयनको समय तालिका निर्धारण गर्ने ।

**११६. नगरस्तरीय योजनाको सञ्चालनः** (१) नगरस्तरीय योजना देहायबमोजिम सञ्चालन हुनेछन्:-

(क) नगरपालिकाको आफ्नै स्रोतबाट,

(ख) जिल्ला विकास समितिको अनुदानबाट,

(ग) नेपाल सरकारको अनुदानबाट,

(घ) विभिन्न स्वदेशी वा विदेशी गैरसरकारी संघसंस्थाबाट प्राप्त रकमबाट,

(ङ) नगरपालिका क्षेत्रभित्र वित्तीय परिचालनबाट ।

(२) नगरपालिकाले आयोजना छनौट गरेपछि सञ्चालन तालिका बनाई कार्यान्वयन गर्नु गराउनु पर्नेछ ।

(३) गैर सरकारी संस्थाबाट सञ्चालन हुने कार्यक्रम नगरपालिकासँग सम्झौता गरी सञ्चालन गराउनु पर्नेछ ।

(४) जिल्ला योजनामा समावेश गर्ने आयोजनाहरू नगरपरिषद्ले पारित गराई जिल्ला विकास समितिमा पठाउनु पर्नेछ ।

(५) नगरपालिकाले सञ्चालन गर्ने कार्यक्रममा गैर सरकारी संस्थाहरूको लगानी समेत हुने अवस्थामा दुई संस्था बीच भएको सम्झौता अनुसार आयोजना सञ्चालन हुनेछ ।

(६) नेपाल सरकारको अनुदानबाट सञ्चालन हुने विशेष आयोजना नेपाल सरकारद्वारा तोकिएको प्रक्रियाबमोजिम हुनेछ ।

(७) नगरपालिका क्षेत्रमा रहेको नगरविकास समितिले योजना तर्जुमा गर्दा नगरपालिकाको परामर्शमा गर्नेछ ।

**११७. आयोजनाको कार्यान्वयन र व्यवस्थापनः** (१) नगर परिषद्बाट स्वीकृत आयोजनाको सञ्चालन गर्न सचिवले आयोजना सञ्चालन तालिका तयार गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिमको तालिका अनुरूप सचिवले सम्बन्धित वडा समितिको संयोजकत्वका आयोजना कार्यान्वयन गर्ने गराउनेछ ।

तर नगरस्तरमा जनतासँग प्रत्यक्ष सरोकार राख्ने खालका आयोजनाहरू उपभोक्ता समिति मार्फत सञ्चालन गरिनेछन् ।

(३) उपभोक्ता समितिका सदस्यलाई आयोजना सञ्चालनको लागि तालीम आवश्यक पर्ने भएमा सो को व्यवस्था नगरपालिकाले गर्नेछ ।

(४) उपभोक्ता समितिले त्यस्तो आयोजनाबाट सेवा प्राप्त गर्ने उपभोक्ताबाट सेवा शुल्क असुल गर्न सक्नेछ ।

(५) उपदफा (४) बमोजिम प्राप्त सेवा शुल्कको रकम सम्बन्धित आयोजनाको मर्मत संभार र संरक्षणमा खर्च गर्नु पर्नेछ ।

(६) उपदफा (४) र (५) बमोजिमको आम्दानी खर्चको विवरण उपभोक्ता समितिले अद्यावधिक गरी नगरपालिकामा पेश गर्नु पर्नेछ ।

११८. **आयोजनाको समीक्षा एवं मूल्याङ्कन**: (१) नगरस्तरीय कुनै पनि आयोजना सम्पन्न भई सकेपछि सो को प्राविधिक जाँचपास एवं आयोजना मूल्यांङ्कन गराउनु पर्नेछ ।

(२) नगरपालिकाबाट संचालित सबै नगरस्तरीय आयोजनाको त्रैमासिक समीक्षा गर्नु पर्नेछ ।

(३) आयोजनाको प्रभाव मूल्यांङ्कन र समीक्षा गर्दा समेटिनु पर्ने क्षेत्र तोकिएबमोजिम हुनेछ ।

११९. **उपभोक्ता समूह गठन गर्न सक्ने**: (१) नगरस्तरीय आयोजना कार्यान्वयन गर्दा आयोजनाबाट प्रत्यक्ष लाभ पाउने व्यक्तिहरू मध्येबाट नगरपालिकाले सम्बन्धित निकायमार्फत् उपभोक्ता समूह गठन गर्न सक्नेछ ।

(२) उपभोक्ता समूहको काम, कर्तव्य र अधिकार तोकिएबमोजिम हुनेछ ।

१२०. **उपभोक्ता समूह र गैरसरकारी संस्थाले आयोजना सञ्चालन गर्ने**: (१) उपभोक्ता समूह र गैर सरकारी संस्थाले आयोजना कार्यान्वयन र सञ्चालन गर्दा नगरपालिकासँग समन्वय राखी गर्नु पर्नेछ ।

(२) आयोजनाको लगत इष्टिमेट तोकिएबमोजिम गर्नु पर्नेछ ।

(३) उपभोक्ता समूह र गैरसरकारी संस्थाले आफ्नो कारोबारको हिसाब किताब अद्यावधिक गरी सोको लेखापरीक्षण गराइ सम्बन्धित नगरपालिकालाई बुझाउनु पर्नेछ ।

१२१. **गैर सरकारी संस्थालाई प्रोत्साहित गर्नु पर्ने**: (१) प्रत्येक नगरपालिकाको क्षेत्रभित्र नगर विकास कार्यक्रमको पहिचान, तर्जुमा, सञ्चालन, रेखदेख मूल्याङ्कन तथा मर्मत सम्भार गर्ने कार्यको लागि नगरपालिकाले गैर सरकारी संस्थाहरूलाई प्रोत्साहित गर्नु पर्नेछ ।

(२) गैरसरकारी संस्थाबाट सञ्चालन हुने आयोजनाहरू आफनै स्रोत र नगरपालिकाबाट प्राप्त स्रोत बाट सञ्चालन हुनेछन् ।

(३) आयोजना सञ्चालन गर्ने गैर सरकारी संस्थाले आयोजना सम्बन्धी पूर्ण विवरण नगरपालिकामा पेश गर्नु पर्नेछ ।

(४) नगरपालिकाले गैर सरकारी संस्थामार्फत् योजनाहरू कार्यान्वयन र सञ्चालन गर्न सक्नेछ ।

१२२. **निर्देशन पालन गर्नु पर्ने**: नगरपालिकाले नगर विकास योजना तर्जुमा र सञ्चालन गर्ने सम्बन्धमा राष्ट्रिय योजना आयोग, नेपाल सरकार र जिल्ला विकास समितिले दिएको निर्देशन पालन गर्नु पर्नेछ ।

१२३. **जाँचपास तथा आयोजनाको फरफारक**: (१) आयोजना सम्पन्न भएपछि तोकिएबमोजिम आयोजनाको जाँचपास र फरफारक गर्नु गराउनु पर्नेछ ।

(२) आयोजना सञ्चालन गर्ने निकायबाट आयोजना सम्पन्न भएको जानकारी नगरपालिकामा प्राप्त भएपछि प्राविधिकले पेश गरेको कार्यसम्पन्न प्रतिवेदन र मूल्यांङ्कनको आधारमा नगरपालिकाले जाँचपास र फरफारक गर्नेछ ।

(३) सम्पन्न आयोजनाको जाँचपास र फरफारकको अनुमोदन नगर परिषद्ले गर्नेछ ।

१२४. **आयोजनाको मर्मत सम्भार र व्यवस्थापन**: (१) नगरपालिकाले सम्पन्न गरेका आयोजनाको मर्मत सम्भारको लागि त्यस्तो आयोजनाबाट सेवा प्राप्त गर्ने व्यक्तिहरूबाट सेवा शुल्क संकलन गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिमको सेवा शुल्कबाट उठेको रकमबाट आयोजनाको मर्मत सम्भार र आवश्यक व्यवस्थापन गर्नु पर्नेछ ।

(३) उपदफा (१) र (२) बमोजिमको आम्दानी-खर्चको अद्यावधिक विवरण नगरपालिकाले राख्नु पर्नेछ ।

## परिच्छेद-७

## आर्थिक व्यवस्था

**१२५. नगरपालिकाको कोषः** (१) नगरपालिकाको आफ्नो छुट्टै कोष हुनेछ ।

(२) उपदफा (१) बमोजिमको कोषमा देहायका रकमहरू रहनेछन्:-

(क) नेपाल सरकारबाट प्राप्त अनुदान रकम ।

(ख) जिल्ला विकास समितिबाट प्राप्त अनुदान रकम ।

(ग) राजश्व बाँडफाँडबाट प्राप्त हुने रकम ।

(घ) कुनै व्यक्ति, संघ, संस्थाबाट प्राप्त दान, उपाहार, चन्दा, सहयोग आदिबाट प्राप्त रकम ।

(ङ) चल अचल सम्पत्तिको बिक्रीबाट प्राप्त रकम ।

(च) कर, दस्तुर, सेवा, शुल्क, महसूल, भाडा, भरोट आदिबाट प्राप्त रकम ।

(छ) ऋृण लगानीबाट प्राप्त रकम ।

(ज) स्रोत  परिचालनबाट प्राप्त हुने रकम ।

(झ) दण्ड जरिवाना आदिबाट प्राप्त रकम ।

(ञ) मालसामान लिलाम बिक्रीबाट प्राप्त रकम ।

(ट) ठेक्का पट्टाबाट प्राप्त रकम ।

(ठ) भूमि करको तोकिएको प्रतिशत रकम ।

(ड) सापटी रकम र धरौटी रकम ।

(ढ) अन्य कुनै स्रोतबाट प्राप्त हुने रकम ।

(ण) नेपाल सरकारको कार्यक्रम तोकेर दिएको रकम ।

(३) नगरपालिकाको कोषमा जम्मा भएको कुनै रकम बैंकमा जम्मा गर्नु पर्नेछ ।

१२६. **नगरपालिकाको कोषको रकम खर्च गर्ने तरिकाः** (१) नगरपालिकाको कोषको सञ्चालन सचिव र लेखा प्रमुखको संयुक्त दस्तखतबाट हुनेछ ।

(२) प्रमुखले स्वीकृत बजेटको परिधिभित्र रही आर्थिक सहायतामा तोकिएबमोजिमको रकम खर्च गर्न सक्नेछ ।

(३) सचिवले नगर परिषद्बाट पारित भएको बजेटको अधिनमा रही नगरपालिकाको निर्णय कार्यान्वयन गर्न रकम खर्च गर्न सक्नेछ ।

(४) नगरपालिकाको कोषको रकम खर्च गर्दा नगर परिषद्ले पारित गरेको बजेटको अधिनमा रही तोकिएबमोजिम खर्च गर्न सक्नेछ ।

(५) नगरपालिकाको कोषबाट खर्च गरेको रकमको फाँटवारी नगरपालिकाको बैठकमा पेश गर्नु पर्नेछ र नगरपालिकाले आफ्नो आय र व्ययको जानकारी प्रत्येक नगरपरिषद्को बैठक भएको मितिले एक महिनाभित्र सार्वजनिक रूपमा वडा-वडामा गराउनु पर्नेछ ।

(६) नगरपालिकाको प्रशासनिक खर्च तोकिएबमोजिम हुनेछ ।

१२७. **निर्माण, खरीद तथा अन्य ठेक्का-पट्टा स्वीकृतिको व्यवस्थाः** (१) नगरपालिकाले निर्माण कार्य गराउँदा देहायबमोजिम गर्नु, गराउनु पर्नेछः-

(क) ठेक्का-पट्टा तथा अन्य कारोबार तोकिएबमोजिम हुनेछ ।

(ख) नगरस्तरीय योजनाको हिसाब किताब सम्बन्धित निकायहरूले राख्नु पर्नेछ ।

(२) नगरपालिकाले आफैं वा गैर-सरकारी संस्थामार्फत् विकास-निर्माणका कार्यहरू तोकिएबमोजिम उपभोक्ता समूह, ठेक्का वा अमानतबाट गराउन सक्नेछ ।

(३) नगरपालिकाबाट गरिने ठेक्का पट्टाको लिखतमा सचिवले दस्तखत गर्नेछ ।

१२८. **रकमान्तर**: नगर परिषद्बाट स्वीकृत वार्षिक बजेटको शीर्षकको बीस प्रतिशतमा नबढाई नगरपालिकाले रकमान्तर गर्न सक्नेछ ।

तर भैपरी आउने र आर्थिक सहायतामा भने रकमान्तर हुनेछैन ।

१२९. **लिलाम बिक्रीको व्यवस्था**: नगर परिषद्बाट स्वीकृत नीतिअनुसार नगरपालिकालाई काम नलाग्ने सरसामान वा सम्पत्तिको लिलाम वा बिक्री प्रक्रिया तोकिएबमोजिम हुनेछ ।

१३०. **नगरपालिकाको बजेट तर्जुमा**: (१) प्रमुखको निर्देशनमा सचिवले आर्थिक वर्ष शुरु हुनुभन्दा अगावै नगरपालिकाको आय र व्ययको बजेट तयार गरी स्वीकृतिका लागि नगरपालिकामा पेश गर्नु पर्नेछ ।

(२) वार्षिक बजेटमा गत आर्थिक वर्षको आय र व्ययको यथार्थ विवरण, चालू आर्थिक वर्षको स्वीकृत बजेट बमोजिम भई सकेको आम्दानी-खर्च र चालू आर्थिक वर्षको अन्त सम्ममा हुने संभावित आम्दानी खर्चको विवरण तथा आगामी आर्थिक वर्षको योजना तथा कार्यक्रम र अनुमानित आय र व्ययको विवरण खुलाउनु पर्नेछ ।

(३) उपदफा (१) बमोजिम पेश भएको बजेट स्वीकृतिका निमित्त प्रमुखले नगरपरिषद्समक्ष पेश गर्नु पर्नेछ ।

१३१. **बजेटको बाँकी रकम**: एक आर्थिक वर्षमा खर्च हुन नसकी बाँकी रहेको बजेटको रकम चालू वर्षमा अधूरा रहेका आयोजना र कार्यक्रम सञ्चालन गर्नको लागि आगामी आर्थिक वर्षको बजेटमा समावेश गर्नु पर्नेछ ।

१३२. **श्रेस्ता राख्ने**: (१) नगरपालिकाले नगरपालिकाको आय र व्ययको श्रेस्ता तोकिएबमोजिम राख्नु पर्नेछ ।

(२) नगरपालिकाले नगर परिषद्बाट तोकिएको सीमाभन्दा बाहिर गई प्रशासनिक खर्च गर्न पाउने छैन ।

१३३. **पारिश्रमिक र बैठक भत्ता**: (१) प्रमुख र उपप्रमुखले तोकिएबमोजिम पारिश्रमिक पाउनेछन् ।

(२) सदस्यहरूले नगरपालिकाको बैठकमा भाग लिएबापत नगर परिषद्ले तोकिदिएबमोजिमको बैठक भत्ता पाउनेछन् ।

**१३४. नगरपालिकाको सम्पत्तिः** (१) नगरपालिकाको क्षेत्रभित्रको देहायका सम्पत्तिउपर नगरपालिकाको हक हुनेछ र त्यस्तो सम्पत्तिको रेखदेख, मर्मत र सम्भार तथा प्रबन्ध नगरपालिकाले गर्नु पर्नेछः-

(क) नगरपालिकाको कोषबाट बनेको, खरीद भएको वा नेपाल सरकार वा कुनै संस्था वा व्यक्तिले दिएको सम्पत्ति ।

(ख) कुनै व्यक्ति विशेषको निजी हक नभएको र नेपाल सरकार वा जिल्ला विकास समितिको नियन्त्रणमा नरहेको सार्वजनिक ढल, नाला, पुल, पोखरी, देवालय, शिवालय, पाटी, पौवा, घर, कुवा, धारा, इनार, गौचर, पानीघाट, निकास, चोक, गल्ली, सडक, बाटो र सडकका दायाँ बाँयाका रुख ।

(ग) नगरपालिकाको स्वामित्वमा भएका घर, जग्गा, पार्क, उद्यान, बसपार्क आदि ।

(घ) प्रचलित वनसम्बन्धी कानुन वा नेपाल सरकारले दिएको वन ।

(ङ) प्राकृतिक सम्पदा ।

(२) उपदफा (१) बमोजिमको सम्पत्ति नगरपालिकाले नेपाल सरकारको स्वीकृति बिना बेच-बिखन गर्न वा अरू कुनै व्यहोराले हकभोग छाड्न पाउने छैन । स्वीकृति बिना बेच-बिखन गरेमा वा हक छोडी कसैलाई दिएमा जुनसुकै अवस्थामा पनि स्वतः बदर हुनेछ ।

**१३५. लेखापरीक्षणः** (१) नगरपालिकको आय र व्ययको आन्तरिक लेखापरीक्षण आफैंले गर्नेछ ।

(२) नगरपालिकाको आय र व्ययको अन्तिम लेखापरीक्षण लेखा समितिको सिफारिशमा नगर परिषद्बाट छनौट भएका दर्तावाल लेखा परीक्षकबाट गराउनु पर्नेछ ।

(३) अन्तिम लेखा परीक्षण हुँदा तयार गरिएको आर्थिक विवरण सहतिको अन्तिम लेखा परीक्षण प्रतिवेदन प्रमुखले लेखा समितिमा पठाउनु पर्नेछ ।

(४) प्रमुखबाट प्राप्त अन्तिम लेखापरीक्षण प्रतिवेदन माथि लेखा समितिले छलफल गरी आफ्नो राय सुझावसहित नगर परिषद्मा प्रस्तुत गर्नु पर्नेछ ।

(५) लेखा समितिको राय सुझावसहित प्राप्त प्रतिवेदनमा लेखिएका बेरुजुमध्ये नगर परिषद्ले नियमित गर्न सक्नेछ । नगर परिषद्ले नियमित गर्न नमिल्ने बेरुजुको सम्वन्धमा असुल फछ्र्यौट गर्ने प्रयोजनका लागि प्रचलित कानुनबमोजिम आवश्यक कारवाही गर्न नगरपालिकामा पठाउनेछ । यसरी प्राप्त भएकोमा नगरपालिकाले सरकारी बाँकीसरह असुल उपर गराउनु पर्नेछ ।

## परिच्छेद-८

## कर शुल्क, सेवा शुल्क, दस्तुर र भाडा



**१३६. मालपोत तथा घर जग्गा कर**: नगरपालिकाले आफ्नो क्षेत्रभित्रको प्रत्येक घर-जग्गामा नगर परिषद्बाट पारित भएबमोजिम घरको आकार, प्रकार, बनौट र सो घरले चर्चेको हाता कम्पाउण्ड समेतको आधारमा तोकिएबमोजिम घर-जग्गा कर लगाउन सक्नेछ ।

(२) नगरपालिकाले नगरक्षेत्रभित्रको जग्गामा तोकिएबमोजिम मालपोत तथा भूमिकर लगाउन सक्नेछ ।

**१३७. बहाल कर**: (१) नगरपालिका क्षेत्रभित्र कुनै घर, पसल, ग्यारेज, गोदाम, टहरा, सेड (छप्पर) कारखाना, जग्गा वा पोखरी पूरै वा आंशिक तवरले बहालमा दिएकोमा नगरपालिकाले बहाल रकममा तोकिएबमोजिम बहाल कर असुल गर्न सक्नेछ ।

(२) नगरपालिकाले आफ्नो क्षेत्रभित्र आफूले निर्माण, रेखदेख वा सञ्चालन गरेको हाट बजार, सार्वजनिक स्थल, ऐलानी जग्गा वा बाटोको छेउमा थाप्न दिएका अस्थायी पसलहरूमा तोकिएबमोजिम बहाल बिटौरी लगाउन सक्नेछ ।

तर सार्वजनिक आवागमन र सर-सफाइमा बाधा पुग्ने गरी वा स्थायी पसल निर्माण गर्न दिन हुँदैन ।

**१३८. व्यवसाय साधन कर**: नगरपालिकाले आफ्नो क्षेत्रभित्र तोकिएको व्यापार व्यवसाय वा पेशामा पूँजीगत लगानी र आर्थिक कारोबारको आधारमा तोकिएबमोजिम व्यवसाय कर लगाई असुल गर्न सक्नेछ ।

१३९. **सवारी कर**: नगरपालिकाले आफ्नो क्षेत्रभित्रका तोकिएको सवारीमा तोकिएबमोजिम सवारी दर्ता तथा वार्षिक सवारी कर र आफ्नो क्षेत्रमा आउने सबै प्रकारको सवारीमा तोकिएबमोजिम पटके सवारी कर लगाउन सक्नेछ ।

१४०. **सम्पत्ति कर**: नगरपालिकाले आफ्नो क्षेत्रभित्र तोकिएको दरमा एकीकृत सम्पत्ति कर लगाउन सक्नेछ ।

१४१. **मनोरन्जन कर**: नगरपालिका क्षेत्रमा रहेको स्वीकृत सिनेमाहल, भिडियोहल, सांस्कृतिक प्रदर्शनहल जस्ता मनोरन्जन साधनमा तोकिएबमोजिम मनोरन्जन कर लगाउन सक्नेछ ।

१४२. **व्यावसायिक भिडियो कर**: नगरपालिकाले कुनै व्यक्ति वा संस्थाले व्यावसायिक प्रयोजनका लागि प्रयोगमा ल्याएको भिडियो, प्रोजेक्टर, केबुल आदिमा तोकिएबमोजिम कर लगाउन सक्नेछ ।

१४३. **विज्ञापन कर**: नगरपालिकाले आफ्नो क्षेत्रका सडक, चोक, सार्वजनिक स्थलमा विज्ञापन, प्रचारप्रसार आदिका लागि राख्न दिने साइनबोर्ड, ग्लोबोर्ड, स्टल आदिमा कर लगाउन सक्नेछ ।

१४४. **पार्किङ्ग शुल्क तथा दस्तुर**: नगरपालिकाले आफूले व्यवस्था गरेको सवारी पार्कमा तोकिएबमोजिम पार्किङ्ग शुल्क लगाउन सक्नेछ ।

१४५. **सेवा शुल्क तथा दस्तुर**: (१) कुनै नगरपालिकाले खानेपानी, बिजुली, धारा, सार्वजनिक टेलिफोन र त्यस्तै अन्य सुविधा उपलब्ध गराए बापत सेवा शुल्क लगाउन सक्नेछ ।

(२) नगरपालिकाले नगर क्षेत्रमा फोहर मैला व्यवस्थापन, सरसफाइ, ढल निकास आदि सुविधा उपलब्ध गराए बापत सेवा शुल्क लगाउन सक्नेछ ।

(३) नगरपालिकाले बनाएका वा सन्चालन गरेका शौचालय, पार्क, स्नानगृह, स्वीमिङ्गपुल, व्यायामशाला, गेष्टहाउस, पर्यटकीय स्थल, होष्टेल, हाट बजार, पशु बधशाला, शव दाह व्यवस्था, धोबीघाट र त्यस्तै अन्य सुविधा उपलब्ध गराए बापत सो उपभोग गर्ने व्यक्तिबाट सेवा शुल्क लिन सक्नेछ ।

(४) उपदफा (१), (२) वा (३) मा उल्लेख भएबमोजिमका सुविधाहरू उपलब्ध गराउने र सो बापत लाग्ने सेवा शुल्क उठाउने काम नगरपालिकाले नेपाल सरकारको

पूर्व-स्वीकृति लिई निजी क्षेत्र मार्फत वा निजी क्षेत्रलाई समेत सहभागी गराई गर्न सक्नेछ ।

(५) नगरपालिकाले निर्माण गरेको सडक, ढल, पुल, पेटी, चोक, गल्ली, नाली, बत्ती आदि मर्मत सुधार गर्न लाग्ने खर्च निर्धारण गरी सम्बन्धित उपभोक्ताहरूबाट वार्षिक रूपमा असुल गर्न सक्नेछ ।

(६) नगरपालिकाले कसैको अचल सम्पत्ति मूल्यांङ्कन गर्दा तोकिएबमोजिमको सेवा शुल्क लिन सक्नेछ ।

(७) नगरपालिकाले आफ्नो क्षेत्रभित्र तोकिएको दरमा नबढ्ने गरी नगरपरिषद्बाट पारित दरमा बक्सौनी तथा सिफारिस दस्तुर लगाउन सक्नेछ ।

१४६. **कर, दस्तुर, शुल्क, महसूल आदि छुटः** (१) यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि नेपाल सरकार, वैदेशिक कुटनैतिक नियोग वा एजेन्सी तथा लाभको उद्देश्य नराखी सञ्चालन हुने संघ संस्थालाई नगरपालिकाकाले सेवा उपलब्ध गराएबापत लाग्ने सेवा शुल्क बाहेक अन्यकर दस्तुर, शुल्क महसूल लगाउन पाउने छैन ।

तर त्यस्तो छुट नेपाल सरकारको पूर्ण वा आंशिक स्वामित्व भएको संस्थान वा संघ संस्थाको व्यापारिक कारोबारलाई प्राप्त हुने छैन ।

(२) विदेशी ऋृण वा सहायताबाट संचालित परियोजनाको लागि नेपाल सरकार वा कुनै विकास समितिले पैठारी गरेको माल सामानमा नगरपालिकाले कुनै कर, दस्तुर, शुल्क, महसूल लगाउन पाउने छैन ।

१४७. **ऐन, नियम विपरित कर, दस्तुर, शुल्क वा महसूल लिन नपाउनेः** नगरपालिकाले यो ऐन वा यस ऐनअन्तर्गत बनेका नियमहरू विपरित कुनै पनि प्रकारको कर, दस्तुर, शुल्क वा महसूल उठाउन पाउनेछैन र उठाएमा नेपाल सरकारले सो कार्यलाई रोक्न र त्यसरी उठाएको कर, दस्तुर, शुल्क वा महसूलको रकम सम्बन्धित व्यक्तिलाई फिर्ता बुझाउने आदेश दिन सक्नेछ ।

१४८. **ऋृण लिन सक्नेः** नगरपालिकाले नगर परिषद्बाट स्वीकृत नीति अनुसार आफ्नो हक भोगको सम्पत्ति धितो राखी वा नराखी वा नेपाल सरकारको जमानीमा बैंक वा अन्य कुनै संघ संस्थाबाट ऋृण सापटी लिन सक्नेछ ।

# परिच्छेद-९

## भवन निर्माण सम्बधी व्यवस्था

१४९. **अनुमति नलिई भवन निर्माण गर्न नहुने**: नगरपालिका क्षेत्रमा प्रमुखबाट भवन निर्माण गर्ने अनुमति नलिई कसैले पनि भवन निर्माण गर्न हुँदैन ।

**स्पष्टीकरण**: यस परिच्छेदमा "भवन निर्माण" भन्नाले नयाँ भवन बनाउने, पुरानो भवन भत्काई पुनः निर्माण गर्ने, तल्ला थप गर्ने, मोहडा फेर्ने वा साविकमा थपघट गरी झ्याल, ढोका, बार्दली, कौशी, दलान, टहरा तबेला वा ग्यारेज बनाउने वा कम्पाउण्डवाल लगाउने कार्य सम्झनु पर्दछ ।

१५०. **अनुमतिको लागि दरखास्त**: (१) नगरपालिका क्षेत्रमा भवननिर्माण गर्न चाहने व्यक्ति वा सरकारी कार्यालयले भवननिर्माण गर्ने अनुमतिको लागि भवनको नक्शासहित तोकिएको ढाँचामा नगरपालिकासमक्ष दरखास्त दिनुपर्नेछ ।

**स्पष्टीकरण**: यस परिच्छेदमा "सरकारी कार्यालय" भन्नाले सर्वोच्च अदालत, संसद्, राजपरिषद्, अख्तियार दुरूपयोग अनुसन्धान आयोग, महालेखा परीक्षक, लोकसेवा आयोग तथा अन्य संवैधानिक निकायको कार्यालय र शाही नेपाली सेना एवं नेपाल प्रहरीलगायतका सबै सरकारी कार्यालय र अदालत समेत सम्झनुपर्दछ ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि भवन निर्माण गर्ने अनुमतिको लागि दरखास्त दिँदा सरकारी निकायले राष्ट्रिय सुरक्षाको दृष्टिले भवनको नक्सा पेश गर्न नमिल्ने भएमा दरखास्तमा भवनको लम्बाई, चौडाई, उचाई र तल्ला तथा जम्मा क्षेत्रफल मात्र उल्लेख गर्न सक्नेछ ।

**स्पष्टीकरण**: यस परिच्छेदमा "नक्सा" भन्नाले भवन निर्माण सम्वन्धी रेखाचित्र, विवरण र अन्य कागजपत्र सम्झनु पर्दछ ।

१५१. **नक्सामा खुलाउनु पर्ने**: नयाँ भवन निर्माण गर्ने नक्सामा अन्य कुराहरूको अतिरिक्त सो भवनको छुट्टै चर्पी र सकपिट तथा त्यस्तो भवन अर्को भवनसँग जोडी बनाउने भएमा सो भवनको छुट्टै किलास रहने गरी नक्सामा खुलाउनु पर्नेछ ।

**१५२. <u>हक भोगको निस्सा वा मञ्जुरीको लिखत पेश गर्नु पर्नेः</u>** भवन निर्माण गर्ने अनुमतिको लागि दफा १५० बमोजिम दरखास्त दिँदा आफ्नो हक भोगको जग्गामा निर्माण गर्ने भए हक भोगको निस्सा र अरूको हक भोगको जग्गामा निर्माण गर्ने भए निजको हक भोगको निस्सासहित मञ्जुरीको लिखत पेश गर्नु पर्नेछ ।

**१५३. <u>जाँचबुझ गर्नेः</u>** भवन निर्माण गर्ने अनुमतिको लागि दफा १५० बमोजिम दरखास्त परेपछि सो दरखास्त रित पूर्वकको छ छैन जाँचबुझ गरी कुनै रित नपुगेको भए सो पुऱ्याउन लगाई रित पूर्वकको दरखास्त परेको सात दिनभित्र नगरपालिकाले देहायबमोजिम गर्नु पर्नेछः-

(क) त्यस्तो भवनको निर्माणबाट संधियार कसैलाई पिर मर्का पर्ने भए आफूलाई मर्का परेको विवरण खुलाई पन्ध्र दिनभित्र उजूर गर्न आउनु भनी आफ्नो कार्यालयमा, संधियारको घर दैलोमा र भवन निर्माण हुने ठाउँमा सबैले देख्ने गरी सूचना टाँस्ने,

(ख) खण्ड (क) बमोजिमको सूचनामा उल्लेखित म्याद नाघेको तीन दिनभित्र इन्जिनियर वा ओभरसियर र अन्य कर्मचारी समेत संयुक्त रूपमा खटाई दरखास्तमा उल्लेख भएबमोजिम भवन निर्माण गर्न मिल्ने नमिल्ने कुराको जाँच गर्न लगाउने ।

**१५४. <u>प्रतिवेदन पेश गर्नेः</u>** दफा १५३ को खण्ड (ख) बमोजिम खटिएका कर्मचारीहरूले भवन निर्माण गर्न मिल्ने नमिल्ने कुराको जाँचबुझ गर्ने सन्दर्भमा सर्जमीन गर्दा सर्जमीनमा उपस्थित भएका व्यक्तिले भनेका कुराहरू समेत खुलाई सर्जमीन मुचुल्का तयार गरी दरखास्तमा उल्लेख भएबमोजिम भवन निर्माण गर्न मिल्ने नमिल्ने व्यहोरा खुलाई त्यसरी जाँचबुझ गर्न खटिएको मितिले पन्ध्र दिनभित्र नगरपालिकासमक्ष प्रतिवेदन पेश गर्नु पर्नेछ ।

**१५५. <u>अनुमति दिनेः</u>** (१) दफा १५३ को खण्ड (क) बमोजिम उजूर नपरेकोमा दफा १५४ बमोजिम प्रतिवेदन प्राप्त भएको मितिले सात दिनभित्र प्रमुखले भवन निर्माण गर्ने अनुमति दिनु पर्नेछ।

(२) दफा १५३ को खण्ड (क) बमोजिम उजूर परेकोमा सम्बन्धित पक्षलाई बोलाई तथ्य कुरा पत्ता लगाई हक बेहकमा निर्णय दिनु पर्ने अवस्थामा बाहेक दफा १५४ बमोजिम प्रतिवेदन प्राप्त भएको मितिले तीस दिनभित्र प्रमुखले अनुमति दिनु पर्नेछ ।

(३) दफा १५३ को खण्ड (क) बमोजिम परेको उजूरीबाट भवन निर्माण गर्ने जग्गामा तेरो मेरो परी हक बेहक छुट्याउनु पर्ने देखिन आएमा त्यस्तो उजूरी परेको मितिले पैंतीस दिनभित्र अदालतमा उजूर गर्न जानु भनी पर्चा खडा गरी सम्बन्धित पक्षहरूलाई सुनाउनु पर्नेछ ।

तर त्यस्तो जग्गा मध्ये केही भागमा मात्र विवाद परेको र त्यस्तो विवाद परे जतिको जग्गामा अदालतबाट ठहरेबमोजिम हुने गरी बाँकी जग्गामा भवन निर्माण गर्न मञ्जुर गरी अर्को नक्सासहित दरखास्त दिएमा त्यस्तो दरखास्त प्राप्त भएको मितिले पन्ध्र दिनभित्र प्रमुखले अनुमति दिन सक्नेछ ।

(४) यस दफाबमोजिम भवन निर्माण गर्ने अनुमति दिंदा नगरपालिकाले तोकिदिएबमोजिमको दस्तुर लिनु पर्नेछ ।

**१५६.** **<u>नक्सा पास गर्ने</u>:** (१) दफा १५५ बमोजिम प्रमुखले कुनै भवन निर्माण गर्न अनुमति दिँदा त्यस्तो भवनको नक्सा समेत पास गरी दिनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम प्रमुखले कुनै भवनको नक्सा पास गर्दा भौतिक विकास योजना र प्रचलित कानुनबमोजिम निर्धारित मापदण्ड अनुकूल हुने गरी नक्सामा आवश्यक थपघट गरी पास गर्न सक्नेछ ।

**१५७.** **<u>नक्सामा हेरफेर गर्ने</u>:** दफा १५६ बमोजिम पास भएको नक्सामा पछि केही हेरफेर गर्नु परेमा तल्ला थप्ने, मोहडा बदल्ने वा लम्बाई, चौडाई बढाउने कुरा बाहेक प्रचलित कानुनबमोजिम निर्धारित मापदण्डमा प्रतिकूल असर नपर्ने गरी अन्य कुरा गर्नको लागि प्रमुखले नक्सामा हेरफेर गर्न स्वीकृति दिन सक्नेछ ।

**१५८.** **<u>सूचना दिने</u>:** दफा १५७ मा जुनसुकै कुरा लेखिएको भए तापनि दफा १५४ बमोजिम प्राप्त प्रतिवेदन अनुसार वा अन्य कुनै कारणले कुनै भवन निर्भाण गर्न अनुमति दिन नमिल्ने भएमा प्रमुखले त्यसको कारण खुलाई त्यस्तो प्रतिवेदन प्राप्त भएको मितिले सात

दिनभित्र दफा १५० बमोजिम भवन निर्माण गर्न अनुमतिको लागि दरखास्त दिने व्यक्ति वा सरकारी निकायलाई सूचना दिनु पर्नेछ ।

**१५९. उजूरी दिन सक्ने**: (१) प्रमुखले दफा १५५ बमोजिम म्यादभित्र अनुमति नदिएमा त्यस्तो म्याद नाघेको मितिले र दफा १५८ बमोजिम दिएको सूचनामा चित्त नबुझेमा त्यस्तो सूचना पाएको मितिले पैंतीस दिनभित्र दफा १५० बमोजिम भवन निर्माण गर्न अनुमतिको लागि दरखास्त दिने व्यक्ति वा निकायले नगरपालिकासमक्ष उजूर दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम कुनै उजूरी परेमा नगरपालिकाले तथ्य कुरा बुझी अनुमति दिनु पर्ने देखिएमा यथाशीघ्रि अनुमति दिनको लागि प्रमुखलाई निर्देशन दिनु पर्नेछ ।

**१६०. भवन निर्माण गर्नु पर्ने अवधि**: (१) यस ऐनबमोजिम कुनै भवन निर्माण गर्न अनुमति पाएकोमा त्यसरी अनुमति पाएको मितिले दुई वर्षभित्र त्यस्तो भवन निर्माण गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिमको म्यादभित्र भवन निर्माण गर्न नसकेमा म्याद थपको लागि नगरपालिकासमक्ष दरखास्त दिनु पर्नेछ ।

(३) उपदफा (२) बमोजिम कुनै दरखास्त परेमा प्रमुखले पहिले लागेको दस्तुरको पाँच प्रतिशत दस्तुर लिई दुई वर्षको लागि भवन निर्माण गर्ने म्याद थप गरिदिन सक्नेछ ।

**१६१. जाँचबुझ र कारबाही**: (१) नगरपालिका क्षेत्रमा कसैले निर्माण गरेको वा गरिरहेको भवनको सम्बन्धमा देहायको कुराहरूको जाँचबुझ गर्न प्रमुखले कुनै इन्जिनियर, ओभरसियर वा कर्मचारीलाई खटाउन सक्नेछः-

(क) त्यस्तो भवन निर्माण गर्न यस ऐनबमोजिम अनुमति लिएको छ, छैन ।

(ख) त्यस्तो भवन यस ऐनबमोजिम पास भएको नक्सा अनुसार निर्माण भएको वा भइरहेको छ, छैन, र

(ग) त्यस्तो भवनले सार्वजनिक जग्गा, बाटो, मन्दिर, चोक, ढल, नाला, पोखरी आदि मिचेको छ, छैन ।

(२) उपदफा (१) बमोजिम जाँचबुझ गर्न खटिएको व्यक्तिले त्यसरी खटिएको मितिले पन्ध्र दिनभित्र प्रचलित कानुनको रित पुऱ्याई जाँचबुझ गरी आफ्नो सुझावसहितको प्रतिवेदन प्रमुखसमक्ष पेश गर्नु पर्नेछ ।

(३) भवन निर्माण गर्ने व्यक्ति र भवन निर्माण कार्यसँग सम्बन्धित सबैले उपदफा (१) बमोजिम जाँचबुझ गर्न आउने व्यक्तिलाई निजले सोधेको प्रश्नको जवाफ दिनु र मागेको कागजपत्र दिनु वा देखाउनु र आवश्यक सहयोग पुऱ्याउनु पर्नेछ ।

(४) उपदफा (२) बमोजिम पेश भएको प्रतिवेदन अनुसार कसैले यस ऐनबमोजिम अनुमति नदिई वा सार्वजनिक जग्गा, बाटो, मन्दिर, चोक, ढल, नाला, पोखरी आदि मिची भवन निर्माण गरेको वा गरिरहेको ठहरेमा प्रमुखले सो भवन वा त्यसको कुनै भाग भत्काउने आदेश दिनु पर्नेछ ।

(५) उपदफा (२) बमोजिम पेश भएको प्रतिवेदन अनुसार कसैले यस ऐनबमोजिम पास भएको नक्सामा प्रमुखको स्वीकृति बेगर हेरफेर गरी भवन निर्माण गरेको वा गरिरहेको ठहरेमा प्रमुखले एक लाख रुपैयाँसम्म जरिबाना गर्न वा सो भवन वा त्यसको कुनै भाग भत्काउने आदेश दिन सक्नेछ ।

(६) उपदफा (४) वा (५) बमोजिम आदेश दिनु अघि प्रमुखले त्यस्तो भवन निर्माण गर्ने व्यक्तिलाई आफ्नो सफाइ पेश गर्ने मनासिब मौका दिनु पर्नेछ ।

**१६२.** **<u>पुनरावेदन</u>**: दफा १६१ को उपदफा (४) वा (५) बमोजिम प्रमुखले दिएको आदेशमा चित्त नबुझ्ने व्यक्तिले त्यस्तो आदेश पाएको मितिले पैंतीस दिनभित्र पुनरावेदन अदालतमा पुनरावेदन दिन सक्नेछ र त्यस्तो पुनरावेदनको सम्बन्धमा पुनरावेदन अदालतबाट भएको निर्णय अन्तिम हुनेछ ।

**१६३.** **<u>भवन भत्काउने र लागेको खर्च असुल गर्ने</u>**: (१) दफा १६१ को उपदफा (४) वा (५) बमोजिम कुनै भवन वा त्यसको कुनै भाग भत्काउने आदेश भएमा त्यस्तो आदेश उपर दफा १६२ बमोजिम पुनरावेदन परेकोमा पुनरावेदन अदालतबाट त्यस्तो भवन वा त्यसको कुनै भाग भत्काउने गरी निर्णय भएको मितिले पैंतीस दिनभित्र र पुनरावेदन नपरेकोमा पुनरावेदन गर्ने म्याद नाघेको मितिले पैंतीस दिनभित्र सम्बन्धित व्यक्तिले प्रमुखको आदेश वा पुनरावेदन अदालतको निर्णयबमोजिम त्यस्तो भवन वा त्यस्को कुनै भाग भत्काउनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिमको म्यादभित्र सम्बन्धित व्यक्तिले त्यस्तो भवन वा त्यसको कुनै भाग नभत्काएमा नगरपालिकाले नै त्यस्तो भवन वा त्यसको कुनै भाग भत्काउन सक्नेछ र त्यसरी भत्काउँदा लागेको खर्च सम्बन्धित व्यक्तिबाट असुल उपर गरिनेछ ।

१६४. **अधिकार प्रत्यायोजनः** प्रमुखले यस ऐन बमोजिम आफूलाई प्राप्त अधिकार उपप्रमुख वा अन्य कुनै सदस्यलाई प्रत्यायोजन गर्न सक्नेछ ।

## परिच्छेद-१०

## दण्ड सजाय

१६५. **नगरपालिकाले सजाय गर्न सक्नेः** (१) नगरपालिकाले देहायको विषयमा देहायबमोजिम सजाय गर्न सक्नेछः-

(क) अर्कालाई दुःख दिने नियतले बाधा अवरोध पुऱ्याउने गरी ढल निकास, चर्पी, सेफ्टीट्यांकी बनाउने, राख्ने जस्ता कार्य गरेमा नगरपालिकाले त्यस्तो कार्य रोक्न, भत्काउन वा हटाउन आदेश दिन सक्नेछ । सो आदेशबमोजिम रोक्न, भत्काउन वा हटाउन नमानेमा नगरपालिकाले मानिस पठाई रोक्न भत्काउन वा हटाउन सक्नेछ । यसरी भत्काउँदा वा हटाउँदा लागेको खर्च सम्बन्धित आदेश नमान्ने व्यक्तिबाट असुल गरी पन्ध्र हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

(ख) नगरपालिका क्षेत्रभित्र कसैले अर्कालाई अप्ठेरो पार्ने नियत राखी रुख लगाउने वा पर्खाल लगाउने वा घर टहरा निर्माण गर्ने जस्ता काम गरेमा नगरपालिकाले त्यस्तो रुख, पर्खाल वा घर, टहरा हटाउन आदेश दिन सक्नेछ र सो आदेशबमोजिम नहटाएमा नगरपालिकाले मानिस पठाइ हटाउन सक्नेछ । यसरी हटाउँदा लागेको खर्च सम्बन्धित अटेर गर्ने व्यक्तिसँग असुल गरी पन्ध्र हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

(ग) नगरपालिका क्षेत्रभित्र निर्दिष्ट स्थानमा फोहोर मैला नफाली जतातते फालेमा त्यस्तो फोहर मैला हटाउन लाग्ने खर्च समेत सम्बन्धित व्यक्तिबाट असुल गरी पन्ध्र हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

(घ) नगरपालिकाको इजाजत बेगर कसैले सार्वजनिक बाटो वा स्थान घेर्ने वा रोक्ने आवत जावतमा अवरोध खडा गर्ने काम गरेमा घेरा, बार र अवरोधका सामान हटाउन लगाई पन्ध्र हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

(ङ) नगरपालिका क्षेत्रभित्रका सार्वजनिक सम्पत्ति कसैले हानी नोक्सानी गरेमा वा अतिक्रमण वा अपचलन गरेमा वा सार्वजनिक संरचना बिगारेमा प्रचलित कानुनले सजाय तोकेकोमा सोहीबमोजिम र नतोकेकोमा नगरपालिकाले पन्ध्र हजार रुपैयाँसम्म जरिवाना गरी त्यस्तो हानी नोक्सानीको विगो सम्बन्धित व्यक्तिसित असुल उपर गर्न वा साविक अवस्थामा तयार गर्न लगाउन सक्नेछ ।

(च) कसैले आफ्नो घर, छिमेकीको घर, आंगन, चोकमा फोहर मैला फालेमा वा वातावरण दुर्गन्धित हुने कार्य गरेमा नगरपालिकाले पन्ध्र हजार रुपैयाँसम्म जरिवाना गरी त्यस्तो हानी नोक्सानीको विगो सम्बन्धित व्यक्तिसित असुल उपर गर्न वा साविक अवस्थामा तयार गर्न लगाउन सक्नेछ ।

(छ) नगरपालिका क्षेत्रभित्र कसैले कुनै किसिमको यन्त्र जडान गरी वा कुनै उपकरण वा मनोरन्जनका साधनद्वारा छरछिमेक वा समाजमा शान्ति भंग हुने क्रियाकलाप गरेमा नगरपालिकाले त्यस्तो कार्य नगर्न वा उपकरण हटाउन पर्नेमा हटाउने आदेश दिन सक्नेछ र सो आदेश नमानेमा सम्बन्धित व्यक्तिलाई पन्ध्र हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

(ज) नगरपालिकाले आफ्नो क्षेत्रभित्रका पसलहरूमा मूल्य-सूची राख्न आदेश दिन सक्नेछ र सो बमोजिम मूल्य-सूची नराखेमा

सम्बन्धित पसल धनीलाई पन्ध्र हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

(२) नगरपालिकाले ठेकेको वा लगाएको कर, दस्तुर, शुल्क, महसूल तथा असुल गर्न बाँकी अन्य कुनै रकम कुनै व्यक्तिले नबुझाएमा नगरपालिकाले देहायबमोजिमको कारवाही गर्न सक्नेछः

(क) यस ऐनबमोजिम उठाउन पाउने कर, दस्तुर, शुल्क तथा असुल गर्न बाँकी अन्य रकम कुनै व्यक्तिले नबुझाएमा त्यस्तो व्यक्तिको चल, अचल सम्पत्तिको स्वामित्व हस्तान्तरण रोक्का गर्न सम्बन्धित निकायलाई लेख्न, व्यापार व्यवसायमा सिलबन्दी तथा तालाबन्दी गर्न र निकासी पैठारी लगायतका कारोबार रोक्का गर्न सक्नेछ ।

(ख) नगरपालिकाले यस ऐन बमोजिम उठाउन पाउने रकम खण्ड (क) बमोजिम सम्बन्धित व्यक्तिको घर, जग्गा, कारोबार वा जेथा रोक्का गर्दा पनि उठ्न नसकेमा नगरपालिकाले निजको घर, जग्गा वा अन्य कुनै जेथा भए सो लिलाम बिक्री गरी असुल उपर गर्न सक्नेछ ।

(ग) यस ऐन अन्तर्गतको काम कारोबारको सिलसिलामा कुनै ठेकेदारले राखेको धरौटी वा जमानत सो कार्य गर्न नसकेको अवस्थामा नगरपालिकाले त्यस्तो धरौटी जफत गरी वा जमानत लिलाम बिक्री गरी असुल उपर गर्न सक्नेछ ।

तर जफत वा लिलाम बिक्री गरी प्राप्त हुन आएको रकम त्यस्तो व्यक्तिले नगरपालिकालाई बुझाउनु पर्ने रकम भन्दा बढी हुन आएमा बढी भएको रकम सम्बन्धित व्यक्तिलाई फिर्ता दिनु पर्नेछ ।

(३) उपदफा (२) को खण्ड (ख) वा (ग) बमोजिम नगरपालिकाले लिलाम बिक्री गर्दा प्रचलित कानुनबमोजिम गर्नु पर्नेछ ।

(४) यस ऐनबमोजिम तिर्नु बुझाउनु पर्ने कर, दस्तुर, शुल्क, महसुल तथा असुल गर्न बाँकी अन्य कुनै रकम नबुझाएमा नगरपालिकाले उपलब्ध गराएको सेवा त्यस्तो व्यक्तिको हकमा बन्द गर्न सक्नेछ ।

(५) यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम, विनियम वा आदेशको उल्लंघन गरी कसैले कुनै काम गरेमा यस ऐनमा अन्यत्र दण्ड सजाय तोकिएमा सोहीबमोजिम र नतोकिएकोमा नगरपालिकाले एक हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

(६) यस दफा अन्तर्गत सजाय पाईसकेकोमा पुनः सोही कसुर दोहोऱ्याई गर्नेलाई नगरपालिकाले पटकै पिच्छे दोब्बर सजाय गर्न सक्नेछ ।

(७) यस दफाबमोजिम नगरपालिकाले गरेको सजायमा चित्त नबुझ्ने पक्षले त्यस्तो निर्णय थाहा पाएको मितिले पैंतीस दिनभित्र सम्बन्धित जिल्ला अदालतमा पुनरावेदन गर्न सक्नेछ ।

**१६६. <u>दण्ड जरिवानाको असुली</u>:** यस ऐन बमोजिम नगरपालिकाले गरेको दण्ड जरिवाना दफा २६० बमोजिमको प्रक्रिया अपनाई असुल उपर गरिनेछ ।

## परिच्छेद-११

## <u>उजूरी र तत्सम्बन्धी व्यवस्था</u>

**१६७. <u>उजूरी</u>:** (१) सदस्य वा नगरपालिकाका कुनै कर्मचारीले दिएको आदेश वा अह्राएको काम उपर चित्त नबुझ्ने व्यक्तिले यस ऐनमा अन्यथा व्यवस्था भएकोमा बाहेक पैंतीस दिनभित्र प्रमुखसमक्ष उजूर गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम उजूर परेमा त्यस्तो उजूर परेको नब्बे दिनभित्र प्रमुखले निर्णय गरी दिनु पर्नेछ । उक्त म्यादभित्र प्रमुखले निर्णय नगरेमा सम्बन्धित व्यक्तिले नेपाल सरकारसमक्ष उजूर गर्न सक्नेछ ।

(३) उपदफा (१) वा (२) बमोजिम उजूरी परेपछि प्रमुख वा नेपाल सरकारले आवश्यक जाँचबुझ गरी त्यस्तो आदेश सदर, बदर वा परिवर्तन गर्न सक्नेछ ।

(४) उपदफा (३) बमोजिम प्रमुख वा नेपाल सरकारले गरेको निर्णय अन्तिम हुनेछ ।

(५) उपदफा (१) वा (२) बमोजिम कसैको उजूरी परेपछि त्यस्तो उजूरीमा निर्णय दिने अधिकारीको आदेशले सम्बन्धित काम कारबाही मुलतवी राख्न सकिनेछ ।

१६८. **<u>मुद्दा चलाउने हदम्याद</u>:** यो ऐन वा यस ऐन अन्तर्गत बनेका नियम वा विनियम अनुसार वा प्रचलित कानुनले दिएको अधिकार प्रयोग गरी गरेको कुनै कामको सम्बन्धमा नगरपालिका, प्रमुख, उपप्रमुख, सदस्य वा कर्मचारी वा नगरपालिकाले काममा लगाएको व्यक्ति उपर देहायमा लेखिए बमोजिम नभई मुद्दा चल्न सक्नेछैनः-

(क) मुद्दा चलाउने कारण र वादी हुनेको वा निजको वारिस भए त्यसको नाम र ठेगाना खोली लिखित सूचना नगरपालिका, प्रमुख, उपप्रमुख, सदस्य वा कर्मचारी वा नगरपालिकाले काममा लगाएको व्यक्तिलाई बुझाएको वा हुलाकद्वारा रजिष्ट्र गरी पठाएको एक महिना ननाघी, र

(ख) मुद्दा चलाउने कारण भएको तीन महिनाभित्र मुद्दा दायर नभई ।

१६९. **<u>कर्तव्य पालन गर्दा वा अधिकार प्रयोग गर्दा असल नियतले काम गरेमा बचाउ</u>:** प्रमुख, उपप्रमुख वा नगरपालिकाले कुनै काममा लगाएको व्यक्तिले यो ऐन वा यस ऐन अन्तर्गत बनेका नियम वा विनियमबमोजिम गर्नु पर्ने कर्तव्य पालना गर्दा वा पाएको अधिकार प्रयोग गर्दा असल नियतले गरेकोमा सजायको भागी हुनेछैन ।

## भाग-४

## जिल्ला विकास समिति सम्वन्धी व्यवस्था

### परिच्छेद - १

### जिल्ला विकास क्षेत्र र इलाका विभाजन

१७०. **<u>जिल्ला विकास क्षेत्र तोक्ने</u>:** नेपाल सरकारले स्थानीय प्रशासन ऐन, २०२८ बमोजिम कायम भएको प्रत्येक जिल्लालाई जिल्ला विकास क्षेत्र तोक्न सक्नेछ ।

१७१. **<u>जिल्ला विकास क्षेत्रको इलाका विभाजनः</u>** (१) प्रत्येक जिल्ला विकास क्षेत्रलाई नेपाल सरकारले यो ऐन प्रारम्भ हुँदाको बखत कायम भएको इलाका संख्या नघट्ने गरी कम्तीमा नौ र बढीमा सत्र इलाकामा विभाजन गर्नेछ ।

(२) उपदफा (१) बमोजिम विभाजित जिल्ला विकास क्षेत्रको इलाकाहरूको सीमाना हेरफेर गर्नु परेमा नेपाल सरकारले सम्बन्धित विशेषज्ञ समेत रहेको समिति गठन गरी सो समितिको सिफारिश एवं जिल्ला परिषद्को परामर्शमा निर्वाचन आयोगको स्वीकृति लिई सिमाना हेरफेर गर्न सक्नेछ ।

तर, यसरी सिमाना हेरफेर गर्दा निर्वाचन हुने साल भन्दा एक वर्ष अगावै गरिसक्नु पर्नेछ ।

## परिच्छेद-२

## <u>जिल्ला परिषद् सम्बन्धी व्यवस्था</u>

१७२. **<u>जिल्ला परिषद्को गठनः</u>** (१) दफा १७० बमोजिम तोकिएको जिल्ला विकास क्षेत्रमा एक जिल्ला परिषद् गठन गरिनेछ ।

(२) जिल्ला परिषद्मा देहायबमोजिमका सदस्यहरू रहनेछन्:-

(क) जिल्लाभित्रका प्रत्येक गाउँ विकास समितिका अध्यक्ष र उपाध्यक्ष ,

(ख) जिल्लाभित्रका नगरपालिकाका प्रमुख र उपप्रमुख,

(ग) जिल्ला विकास समितिका सदस्यहरू,

(घ) जिल्लाभित्रका प्रतिनिधि सभा र राष्ट्रिय सभाका सदस्यहरू, पदेन सदस्य,

(ङ) जिल्लाभित्रका एकजना महिलासहित समाजसेवी आर्थिक तथा सामाजिक दृष्टिकोणले पिछडिएका जाति, जनजाति, दलित तथा आदिवासी मध्ये जिल्ला परिषद्मा प्रतिनिधित्व हुन नसकेका वर्गका दफा १७४ बमोजिम जिल्ला परिषद्को सदस्यको लागि चाहिने योग्यता पुगेका व्यक्तिहरूमध्येबाट जिल्ला परिषद्द्वारा मनोनीत छ जना व्यक्तिहरू ।

**१७३. जिल्ला परिषद्को सदस्यको पदावधिः** (१) जिल्ला परिषद्का सदस्यको पदावधि पाँच वर्षको हुनेछ ।

(२) जिल्ला परिषद्का सदस्यको पदावधि गणना गर्दा पदावधि शुरु हुने सालको श्रावण १ गतेदेखि गणना गरिनेछ र पाँच वर्षको पदावधि नबढाई प्रत्येक पाँचौ वर्षको आषाढ मसान्तमा पदावधि समाप्त भएको मानिनेछ ।

(३) उपदफा (१) र (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि यस दफा बमोजिम सदस्यको पदावधि समाप्त हुनु अगावै नयाँ सदस्यको लागि निर्वाचन सम्पन्न भएमा साविकको सदस्यको पदावधि समाप्त भएको मानिनेछ र नवनिर्वाचित सदस्यहरूलाई नै कार्य सञ्चालन गर्ने अधिकार हुनेछ ।

(४) कुनै कारणवश निर्धारित समयमा कुनै जिल्ला परिषद्को सदस्य पदको निर्वाचन वा जिल्ला परिषद्को सदस्यको मनोनयन हुन नसकी अरू समयमा भए पनि त्यस्ता सदस्यको पदावधि गणना गर्दा निर्धारित समयमा निर्वाचित वा मनोनीत भएसरह मानी पदावधिको गणना गरिनेछ ।

(५) कुनै जिल्ला परिषद्को सदस्यको पद कुनै कारणवश रिक्त हुन आएमा बाँकी अवधिको लागि मात्र सो रिक्त पदको पूर्ति निर्वाचित सदस्य पदको लागि प्रचलित कानुनबमोजिम उप-निर्वाचनद्वारा र मनोनीत सदस्यको पदको लागि मनोनयनद्वारा गरिनेछ ।

तर-

(१) पद रिक्त भएको मितिले एक वर्षभित्र उप-निर्वाचन वा मनोनयन गरिसक्नु पर्नेछ ।

(२) एक वर्षभन्दा कम अवधिको लागि उप-निर्वाचन वा मनोनयन गरिने छैन ।

**१७४. जिल्ला परिषद्को सदस्यको लागि चाहिने योग्यताः** जिल्ला परिषद्को सदस्य हुनको लागि देहायबमोजिमको योग्यता पुगेको हुनु पर्नेछः-

(क) नेपाली नागरिक भएको,

(ख) एक्काईस वर्ष उमेर पूरा भएको र प्रचलित कानुनबमोजिम मतदाता हुन योग्यता पुगेको,

(ग) जिल्ला विकास समितिलाई बुझाउनु पर्ने सबै जिन्सी वा नगदी बुझाई सकेको,

(घ) जिल्ला विकास समितिसँग ठेक्का पट्टा वा चल अचल सम्पत्ति सम्बन्धी व्यवहारमा कुनै निजी स्वार्थ नभएको,

(ङ) सार्वजनिक सम्पत्ति हिनामिना गरेको नठहरेको,

तर, असुली भएको प्रमाण पेश गरेमा यो खण्ड लागू हुने छैन ।

(च) नैतिक पतन देखिने फौजदारी अभियोगमा सजाय पाएको भए त्यस्तो सजाय भुक्तान गरेको तीन वर्ष व्यतीत भएको,

(छ) कुनै कानुनले अयोग्य नभएको ।

**१७५. <u>जिल्ला परिषद्को सदस्यता कायम नरहने</u>**ः देहायको अवस्थामा जिल्ला परिषद्को सदस्यता कायम रहने छैनः-

(क) दफा १७४ बमोजिमको योग्यता नभएमा,

(ख) आफू बसोबास गरिआएको क्षेत्र सम्बन्धित जिल्ला विकास क्षेत्रबाट झिकिएमा वा अन्य क्षेत्रमा गाभिएमा,

(ग) प्रतिनिधि सभा वा राष्ट्रिय सभाको सदस्यको निर्वाचनमा उम्मेदवार भएमा वा राष्ट्रिय सभाको सदस्यमा मनोनीत भएमा,

(घ) मनासिब माफिकको सूचना नदिई लगातार तीन पटकसम्म जिल्ला परिषद्को बैठकमा अनुपस्थित रहेमा,

तर त्यस्तो सदस्यलाई सफाइ पेश गर्ने मनासिव मौका नदिई निजको सदस्यता कायम नरहेको सूचना दिइने छैन ।

(ङ) दफा १७३ बमोजिमको पदावधि समाप्त भएमा,

(च) प्रचलित कानुनबमोजिम भ्रष्टाचारको अभियोग वा नैतिक पतन देखिने फौजदारी अभियोग वा तीनवर्षभन्दा बढी कैद सजाय हुने फौजदारी अभियोगमा सजाय पाएमा,

(छ) राजीनामा दिएमा,

(ज) मृत्यु भएमा ।

## परिच्छेद - ३

## जिल्ला विकास समिति सम्बन्धी व्यवस्था

१७६. **जिल्ला विकास समितिको गठनः** (१) दफा १७० बमोजिम तोकिएको जिल्ला विकास क्षेत्रमा जिल्ला परिषद्को कार्यकारिणीको रूपमा एक जिल्ला विकास समिति गठन गरिनेछ ।

(२) जिल्ला विकास समितिमा देहायबमोजिमका सदस्यहरू रहनेछन्:-

(क) जिल्लाका प्रत्येक इलाकाभित्रका गाउँ परिषद् र नगर परिषद्का निर्वाचित सदस्यहरूले आफूमध्येबाट प्रत्येक इलाकाबाट एक जनाका दरले निर्वाचित सदस्यहरू,

(ख) जिल्लाका प्रत्येक गाउँ परिषद् र नगर परिषद्का निर्वाचित सदस्यहरूले आफूमध्येबाट निर्वाचित सभापति र उपसभापति,

(ग) जिल्लाभित्रका प्रतिनिधि सभा र राष्ट्रिय सभाका सदस्यहरू पदेन सदस्य

(घ) दफा १७२ को उपदफा (२) को खण्ड (ङ) बमोजिमका जिल्ला परिषद्का सदस्यहरू मध्येबाट एकजना महिलासहित जिल्ला विकास समितिद्वारा मनोनीत दुई जना सदस्यहरू ।

१७७. **जिल्ला विकास समिति स्वशासित र संगठित संस्था हुनेः** (१) प्रत्येक जिल्ला विकास समिति अविच्छिन्न उत्तराधिकारवाला स्वशासित र संगठित संस्था हुनेछ ।

(२) जिल्ला विकास समितिको आफ्नो एउटा छुट्टै छाप हुनेछ ।

(३) जिल्ला विकास समितिले व्यक्तिसरह चल अचल सम्पत्ति प्राप्त गर्न, उपभोग गर्न र बेच बिखन गर्न सक्नेछ ।

(४) जिल्ला विकास समितिले व्यक्तिसरह आफ्नो नामबाट नालिस उजूर गर्न र सो उपर पनि सोही नामबाट नालिस उजूर लाग्न सक्नेछ ।

**१७८. सदस्यको पदावधिः** (१) जिल्ला विकास समितिको सदस्यको पदावधि पाँच वर्षको हुनेछ ।

(२) जिल्ला विकास समितिको सदस्यको पदावधि गणना गर्दा पदावधि शुरु हुने सालको श्रावण १ गतेदेखि गणना गरिनेछ र पाँच वर्षको पदावधि नबढाई प्रत्येक पाँचौ वर्षको आषाढ मसान्तमा पदावधि समाप्त भएको मानिनेछ ।

(३) उपदफा (१) र (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि यस दफा बमोजिम सदस्यको पदावधि समाप्त हुनु अगावै नयाँ सदस्यको लागि निर्वाचन सम्पन्न भएमा साविकको सदस्यको पदावधि समाप्त भएको मानिनेछ र नवनिर्वाचित सदस्यहरूलाई नै कार्य सञ्चालन गर्ने अधिकार हुनेछ ।

(४) कुनै कारणवश निर्धारित समयमा कुनै जिल्ला विकास समितिको सदस्य पदको निर्वाचन वा मनोनयन सम्पन्न हुन नसकी अरू समयमा सम्पन्न भए पनि निर्वाचित वा मनोनीत सदस्यको पदावधि गणना गर्दा निर्धारित समयमा निर्वाचित वा मनोनीत भएसरह मानी पदावधिको गणना गरिनेछ ।

(५) कुनै जिल्ला विकास समितिको सदस्य पद कुनै कारणवश रिक्त हुन आएमा बाँकी अवधिको लागि मात्र सो पदको पूर्ति निर्वाचित सदस्य पदको लागि प्रचलित कानुनबमोजिम उप-निर्वाचनद्वारा र मनोनीत सदस्य पदको लागि मनोनयनद्वारा गरिनेछ ।

तर-

(१) पद रिक्त भएको मितिले एक वर्षभित्र उप-निर्वाचन वा मनोनयन गरिसक्नु पर्नेछ ।

(२) एक वर्षभन्दा कम अवधिको लागि उप-निर्वाचन वा मनोनयन गरिने छैन ।

१७९. **शपथ ग्रहण गर्नुपर्नेः** (१) सभापतिले जिल्ला न्यायाधीशसमक्ष, उप-सभापति र सदस्यहरूले सभापतिसमक्ष र सभापतिको अनुपस्थितमा उप-सभापतिले जिल्ला न्यायाधीशसमक्ष र सदस्यहरूले उप-सभापतिसमक्ष सपथ ग्रहण गर्नु पर्नेछ ।

(२) उपदफा (१) मा लेखिए देखि बाहेक जिल्ला परिषद्का अन्य सदस्यले सभापतिसमक्ष र सभापतिको अनुपस्थितिमा उप-सभापतिसमक्ष सपथ ग्रहण गर्नु पर्नेछ ।

(३) उपदफा (१) वा (२) बमोजिम शपथ ग्रहण नगरी जिल्ला परिषद् तथा जिल्ला विकास समितिका सदस्यहरूले पद ग्रहण गर्ने छैनन् ।

१८०. **पद त्याग गर्न सक्नेः** (१) सभापतिले उप-सभापति मार्फत जिल्ला विकास समितिसमक्ष र उप-सभापति तथा सदस्यहरूले सभापतिसमक्ष राजीनामा दिई पद त्याग गर्न सक्नेछन् ।

(२) जिल्ला परिषद्का मनोनीत सदस्यहरूले सभापतिसमक्ष र सभापतिको अनुपस्थितिमा उप-सभापतिसमक्ष राजीनामा दिई पद त्याग गर्न सक्नेछन् ।

१८१. **सदस्यको लागि चाहिने योग्यताः** जिल्ला विकास समितिको सदस्यमा निर्वाचित वा मनोनीत हुन देहायबमोजिमको योग्यता हुनु पर्नेछः-

(क) नेपाली नागरिक भएको,

(ख) एक्काईस वर्ष उमेर पूरा भएको र प्रचलित कानुनबमोजिम मतदाता हुन योग्यता पुगेको,

(ग) जिल्ला विकास समितिलाई बुझाउनु पर्ने सबै जिन्सी वा नगदी बुझाई सकेको,

(घ) जिल्ला विकास समितिसँग ठेक्का पट्टा वा चल अचल सम्पत्ति सम्बन्धी व्यवहारमा कुनै निजी स्वार्थ नभएको,

(ङ) सार्वजनिक सम्पत्ति हिनामिना गरेको नठहरेको,

तर असुली भएको प्रमाण पेश गरेमा यो खण्ड लागू हुने छैन ।

(च) नैतिक पतन देखिने फौजदारी अभियोगमा सजाय पाएको भए त्यस्तो सजाय भुक्तान गरेको तीनवर्ष व्यतीत भएको ।

(छ) अन्य प्रचलित कानुनले अयोग्य नभएको ।

**१८२. सदस्यता कायम नरहने**: देहायको अवस्थामा जिल्ला विकास समितिको सदस्यता कायम रहने छैनः-

(क) दफा १८१ बमोजिमको योग्यता नभएमा,

(ख) आफू बसोबास गरिआएको क्षेत्र सम्वन्धित क्षेत्रबाट झिकिएमा वा अन्य क्षेत्रमा गाभिएमा ।

(ग) प्रतिनिधि सभा वा राष्ट्रिय सभाको सदस्यमा उम्मेदवार भएमा वा राष्ट्रिय सभाको सदस्यमा मनोनीत भएमा,

(घ) मनासिब माफिकको सूचना नदिई लगातार तीन पटकसम्म जिल्ला विकास समितिको बैठकमा अनुपस्थित भएमा,

तर त्यस्तो सदस्यलाई सफाइ पेश गर्ने मनासिव मौका नदिई निजको सदस्यता कायम नरहेको सूचना दिइने छैन ।

(ङ) दफा १७८ बमोजिमको पदावधि समाप्त भएमा,

(च) प्रचलित कानुनबमोजिम भ्रष्टाचारको अभियोग वा नैतिक पतन देखिने फौजदारी अभियोग वा तीनवर्षभन्दा बढी कैद सजाय हुने फौजदारी अभियोगमा सजाय पाएमा,

(छ) राजीनामा दिएमा,

(ज) मृत्यु भएमा ।

**१८३. सम्पत्ति विवरण सार्वजनिक गर्नुपर्ने**: सदस्यले दफा १७९ बमोजिम सपथ ग्रहण गरेको मितिले तीस दिनभित्र आफू र आफ्नो एकाघर सगोलका परिवारको सदस्यको नाममा रहेको चल अचल सम्पत्तिको विवरण सार्वजनिक गर्नु पर्नेछ ।

तर सभापति र उपसभापतिले आफू पदबाट हटेपछि पनि पदबाट हटेको मितिले तीस दिनभित्र त्यस्तो सम्पत्तिको विवरण सार्वजनिक गर्नु पर्नेछ ।

**१८४. <u>जिल्ला विकास समितिहरूको वर्गीकरण</u>:** नेपाल सरकारले भौगोलिक विविधता तथा यातायात, संचार, शिक्षा र स्वास्थ्य सम्बन्धी सुविधाहरूको आधारमा जिल्ला विकास समितिहरूलाई तोकिएबमोजिम वर्गीकरण गरी कम सुविधा उपलब्ध र अविकसित जिल्ला विकास क्षेत्रका जिल्ला विकास समितिलाई साधन र सुविधा सम्पन्न गराई विकसित गर्ने व्यवस्था मिलाउन सक्नेछ ।

**१८५. <u>जिल्ला परिषद्को बैठक</u>:** (१) जिल्ला परिषद्को बैठक साधारणतया वर्षको एक पटक बस्नेछ ।

(२) जिल्ला परिषद्को बैठक जिल्ला विकास समितिको सभापतिले बोलाउनेछ ।

(३) प्रत्येक वर्ष जिल्ला परिषद्को बैठक समान्यतया फाल्गुण मसान्तभित्र बोलाउनु पर्नेछ ।

(४) जिल्ला परिषद्को प्रत्येक बैठकमा उपस्थित सदस्यहरूले जिल्ला विकास समितिका सदस्यहरूबाहेक जिल्ला परिषद्का अन्य सदस्यहरूले आफूमध्येबाट छानेको सदस्यले जिल्ला परिषद्को बैठकको अध्यक्षता गर्नेछ ।

तर जिल्ला परिषद्को बैठकमा अध्यक्षको छनौट हुनुभन्दा अघि जिल्ला परिषद्का उपस्थित सदस्यहरूमध्ये उमेरको हिसावले जेष्ठ सदस्यले सो बैठकको अध्यक्षता गर्नेछ ।

(५) जिल्ला विकास समितिको सचिवले जिल्ला परिषद्को सचिवको काम गर्नेछ ।

(६) जिल्ला परिषद्को बैठक बस्ने मिति, समय र स्थानको सूचना तथा विषय सूची बैठक बस्ने दिन भन्दा कम्तीमा पन्ध्र दिन अगावै जिल्ला विकास समितिको सभापतिको निर्देशनमा सचिवले जिल्ला परिषद्का सबै सदस्यहरूलाई पठाउनु पर्नेछ ।

(७) जिल्ला परिषद्को बैठकमा तत्काल कायम रहेको सदस्य संख्याको पचास प्रतिशत सदस्यहरू उपस्थित भएमा बैठकको लागि गणपूरक संख्या पुगेको मानिनेछ ।

(८) गणपूरक संख्याको अभावमा जिल्ला परिषद्को बैठक बस्न नसकेमा सात दिनको सूचना दिई अर्को बैठक बोलाउनु पर्नेछ । सो बैठकको गणपूरक संख्या एक तिहाई हुनेछ । सो गणपूरक संख्या पनि पूरा हुन नसकेमा सो को भोलिपल्ट पुनः अर्को बैठक बोलाउनु पर्नेछ सो बैठकमा जतिसुकै सदस्य उपस्थित भए पनि बैठक सञ्चालन हुनेछ ।

(९) जिल्ला परिषद्का एक तिहाई सदस्यहरूले कुनै खास विषयमा छलफल गर्न बैठक बोलाई पाउँ भनी सभापतिसमक्ष लिखित अनुरोध गरेमा त्यसरी अनुरोध गरेको मितिले तीस दिनभित्र जिल्ला परिषद्को विशेष बैठक बोलाउनु पर्नेछ ।

(१०) जिल्ला परिषद्को बैठकको निर्णय सचिवले प्रमाणित गर्नेछ ।

(११) जिल्ला परिषद्को बैठक सम्बन्धी अन्य कार्यविधि तोकिएबमोजिम हुनेछ ।

**१८६. जिल्ला विकास समितिको बैठकः** (१) जिल्ला विकास समितिको बैठक कम्तीमा महिनाको एक पटक बस्नेछ ।

(२) सभापतिको आदेश अनुसार सचिवले जिल्ला विकास समितिको बैठक बोलाउनेछ ।

तर तीन महिनासम्म पनि सभापतिले बैठक बोलाउने आदेश नदिएमा एक तिहाई सदस्यहरूको लिखित अनुरोधमा सचिवले जिल्ला विकास समितिको बैठक बोलाउनेछ ।

(३) जिल्ला विकास समितिको बैठकको सभापतित्व सभापतिले गर्नेछ र निजको अनुपस्थितिमा उप-सभापतिले र उप-सभापति पनि अनुपस्थित भएमा बैठकमा उपस्थित सदस्यहरूले आफू मध्येबाट छानेको सदस्यले बैठकको सभापतित्व गर्नेछ ।

(४) जिल्ला विकास समितिको बैठकमा तत्काल कायम रहेको सदस्य संख्याको पचास प्रतिशत सदस्यहरू उपस्थित भएमा बैठकको लागि गणपूरक संख्या पुगेको मानिनेछ ।

(५) जिल्ला विकास समितिको बैठकको निर्णय सचिवले प्रमाणित गर्नेछ ।

(६) जिल्ला विकास समितिको बैठक सम्बन्धी अन्य कार्यविधि तोकिएबमोजिम हुनेछ ।

**१८७. बैठकको निर्णयः** (१) यस ऐनमा अन्यथा व्यवस्था भएकोमा बाहेक जिल्ला परिषद् र जिल्ला विकास समितिको बैठकको निर्णय बैठकमा उपस्थित सदस्यहरूको बहुमतको आधारमा गरिनेछ ।

(२) जिल्ला परिषद् र जिल्ला विकास समितिको बैठकमा मत बराबर भएमा बैठकको सभापतित्व गर्ने व्यक्तिले निर्णायक मत दिनेछ ।

(३) पदेन सदस्यले मतदानमा भाग लिन पाउने छैनन् ।

## परिच्छेद-४

## जिल्ला विकास समितिको काम, कर्तव्य र अधिकार

**१८८. जिल्ला परिषद्को काम, कर्तव्य र अधिकारः** (१) जिल्ला परिषद्को काम र कर्तव्य देहायबमोजिम हुनेछः-

(क) जिल्ला विकास समितिले पेश गरेको बजेट, योजना तथा कार्यक्रमहरू पारित गर्ने ।

(ख) जिल्ला विकास समितिले पेश गरेको कर, दस्तुर, शुल्क, महसुल, ऋण वा सापटी तथा आन्तरिक स्रोत सम्वन्धी प्रस्ताव पारित गर्ने ।

(ग) जिल्ला विकास समितिबाट संचालित जिल्ला योजना सम्वन्धी कार्यक्रमहरूको मूल्यांकन गरी आवश्यक निर्देशन दिने ।

(घ) जिल्ला विकास समितिको लेखापरीक्षण प्रतिवेदनमा छलफल गरी कायम रहेका बेरुजुहरू फछ्र्योट गर्न जिल्ला विकास समितिलाई आवश्यक निर्देशन दिने ।

(ङ) जिल्लामा सञ्चालन हुने जिल्लास्तरीय विषयगत कार्यक्रमलाई स्वीकृति दिने ।

(च) जिल्ला विकास समितिको विनियम स्वीकृत गर्ने ।

(छ) जिल्ला विकास समितिको प्रशासनिक कार्यहरूको मूल्यांकन गरी जिल्ला विकास समितिलाई आवश्यक निर्देशन दिने ।

(ज) जिल्ला विकास समितिले प्रस्ताव गरेको कर्मचारीको पारिश्रमिक, दरवन्दी भत्ता तथा अन्य सुविधामा आवश्यकतानुसार स्वीकृति दिने ।

(झ) जिल्ला विकास समितिको सम्पत्ति बेचबिखन, हस्तान्तरण वा भाडामा दिने विषयमा निर्णय गर्ने ।

(ञ) आफूमा रहेका केही अधिकार जिल्ला विकास समितिलाई प्रत्यायोजन गर्ने ।

(२) जिल्ला परिषद्का सम्पूर्ण सदस्य संख्याको बहुमतबाट प्रस्ताव पारित नभई जिल्ला विकास समितिले देहायको काम गर्न सक्ने छैनः-

(क) जिल्ला विकास समितिको सम्पत्ति बेचबिखन वा हस्तान्तरण गर्ने ।

(ख) ऋण लिने ।

(ग) कर, दस्तुर, शुल्क, महसुल लगाउने ।

(घ) तोकिएको अन्य विषय ।

(३) जिल्ला परिषद्ले यो ऐन तथा यस ऐन अन्तर्गत बनेको नियम तथा विनियमबमोजिम आफूलाई भएको अधिकार प्रयोग गर्नेछ ।

(४) जिल्ला परिषद्ले जिल्ला परिषद्को कुनै एक सदस्यको अध्यक्षतामा निज सहित बढीमा पाँचजना सदस्यहरू रहेको एक लेखा समितिको गठन गर्नेछ र त्यस्तो समितिको काम, कर्तव्य र अधिकार तोकिएबमोजिम हुनेछ ।

(५) जिल्ला परिषद्लाई विभिन्न विषयमा आवश्यक सल्लाह र सुझाव दिनको लागि उपदफा (३) बमोजिमको लेखा समितिमा रहने सदस्यहरू बाहेक जिल्ला परिषद्का अन्य सदस्यहरूलाई तोकिएबमोजिमका विषयगत समितिहरूमा रहने गरी जिल्ला परिषद्ले विभिन्न समितिहरू गठन गर्न सक्नेछ ।

(६) जिल्ला परिषद्को अन्य काम, कर्तव्य र अधिकार तोकिएबमोजिम हुनेछ ।

१८९. **<u>जिल्ला विकास समितिको काम, कर्तव्य र अधिकार</u>**: (१) जिल्ला परिषद्को निर्णय र निर्देशनको कार्यान्वयन गर्नु गराउनुको अतिरिक्त जिल्ला विकास समितिको काम र कर्तव्य देहाय बमेजिम हुनेछः-

(क) **<u>कृषि सम्बन्धीः</u>**

(१) कृषि तथा पशु विकास सम्बन्धी जिल्लास्तरीय नीति बनाई सो अनुरूपका कार्यक्रमहरू तर्जुमा एवं सञ्चालन गर्ने र संचालित कार्यक्रमहरूको निरीक्षण र अनुगमन गर्ने, गराउने ।

(२) जिल्लामा आवश्यक पर्ने बीऊ, बिजन, मल तथा अन्य कृषि सामग्रीहरूको व्यवस्था गर्ने, गराउने ।

(३) जिल्ला विकास क्षेत्रभित्र कृषि प्रसार सम्बन्धी सेवा उपलब्ध गर्ने, गराउने ।

(४) कृषि हाट बजार र मेलाको प्रवर्द्धन गर्ने, गराउने ।

(५) कृषि उपजको बजार व्यवस्थापन गर्ने, गराउने ।

(ख) **<u>ग्रामीण खानेपानी तथा वस्ती विकास सम्बन्धीः</u>**

(१) जिल्ला विकास क्षेत्रको ग्रामीण इलाकामा एक भन्दा बढी गाउँ विकास क्षेत्रका जनताहरूलाई लाभ हुने खानेपानी योजनाहरूको तर्जुमा र कार्यान्वयन गर्ने, गराउने ।

(२) जिल्ला विकास क्षेत्रको ग्रामीण इलाकामा वस्ती तथा बजारहरूको विकास सम्बन्धी योजना बनाई कार्यान्वयन गर्ने, गराउने ।

(ग) **जल विद्युत सम्वन्धीः**

स-साना ग्रामीण जल विद्युत तथा अन्य उर्जा सम्वन्धी आयोजनाहरूको तर्जुमा, कार्यान्वयन, सञ्चालन, वितरण तथा मर्मत संभार गर्ने, गराउने ।

(घ) **निर्माण तथा यातायात सम्वन्धीः**

(१) जिल्ला विकास क्षेत्रभित्रको जिल्लास्तरीय सडकहरूको गुरु योजना तयार गरी जिल्ला परिषद्बाट स्वीकृत गराउने ।

(२) स्वीकृत जिल्लास्तरीय सडकहरूका निर्माण, सञ्चालन, अनुगमन, मूल्यांकन तथा मर्मत संभार गर्ने, गराउने ।

(३) जिल्ला विकास क्षेत्रभित्र आवश्यक पर्ने झोलुंगे पूलहरूको योजना तर्जुमा, निर्माण र मर्मत संभार गर्ने, गराउने ।

(४) जिल्ला विकास क्षेत्रभित्र सञ्चालन हुने यातायातका साधनहरू सम्वन्धी आवश्यक व्यवस्था मिलाउने ।

(५) प्रचलित कानुनबमोजिम "घ" श्रेणीका ठेकेदारहरूको इजाजत्र पत्र दिने, खारेजी गर्ने र नवीकरण गर्ने ।

(६) जलमार्ग र रोपवेको विकास तथा प्रवर्द्धन गर्ने ।

(ङ) **भूमि सुधार तथा भूमि व्यवस्था सम्वन्धीः**

जिल्ला विकास क्षेत्रभित्र रहेको ऐलानी तथा सरकारी पर्ती जग्गाहरूको संरक्षण र सम्बर्द्धन गर्ने ।

(च) **महिला विकास तथा असहाय सम्वन्धीः**

(१) जिल्ला विकास क्षेत्रभित्रका महिलाहरूको उत्थानको लागि आवश्यक योजना तयार गरी कार्यान्वयन गर्ने ।

(२) राष्ट्रिय नीति अनुरूप अनाथ बालबालिका, असहाय महिला, वृद्ध, अपांग तथा अशक्तहरूको संरक्षण सम्वन्धी कार्य गर्ने र सामाजिक कुरीति हटाउने तथा चेलीबेटीको एवं नारीको संरक्षण सम्वन्धी काम गर्ने, गराउने ।

(छ) **वन तथा वातावरण सम्वन्धीः**

(१) वन, वनस्पति, जैविक विविधता र भू-संरक्षण सम्वन्धी योजना तयार गरी कार्यान्वयन गर्ने, गराउने ।

(२) वातावरणको संरक्षण र सम्वर्द्धन गर्ने, गराउने ।

(ज) **शिक्षा तथा खेलकूद विकास सम्वन्धीः**

(१) जिल्ला विकास क्षेत्रभित्र विद्यालय स्थापना गर्न प्राथमिकता तोकी सिफारिश गर्ने ।

(२) जिल्ला विकास क्षेत्रभित्रका विद्यालयहरूको स्वीकृति र खारेजीको लागि औचित्य र कारण खोली सिफारिश गर्ने ।

(३) जिल्ला विकास क्षेत्रभित्रका विद्यालयहरूको रेखदेख र अनुगमन गरी सञ्चालन र व्यवस्थापनमा सहयोग गर्ने ।

(४) जिल्लास्तरीय प्रौढ शिक्षा एवं अनौपचारिक शिक्षा सम्वन्धी नीति तथा कार्यक्रमहरूको तर्जुमा गर्ने ।

(५) खेलकूद र शारीरिक विकास सम्वन्धी कार्यक्रम बनाई कार्यान्वयन गर्ने, गराउने ।

(६) जिल्लास्तरीय खेलकूद विकास समिति गठन गर्ने ।

(झ) **श्रमको ज्याला सम्वन्धीः**

(१) जिल्लास्तरमा श्रमको ज्यालादर एवं मजदूरीको दररेट निर्धारण गर्ने ।

(२) बाल श्रम निवारण तथा उद्धार सम्वन्धी कार्यक्रम बनाई सञ्चालन गर्ने ।

(ञ) **सिंचाई र भू-क्षय तथा नदी नियन्त्रण सम्वन्धीः**

(१) जिल्ला विकास क्षेत्रभित्रको एक भन्दा बढी गाउँ विकास क्षेत्रमा सुविधा पुग्ने सिंचाई, कुलो, बाँध र पैनी सम्वन्धी कार्यक्रमहरूको तर्जुमा, कार्यान्वयन, सञ्चालन तथा मरमत संभार गर्ने, गराउने ।

(२) भू-क्षय, नदी कटान आदिबाट प्रभावित क्षेत्रहरूमा त्यस्ता कार्यहरूको रोकथाम गर्ने सम्वन्धी योजना तर्जुमा गरी कार्यान्वयन गर्ने, गराउने ।

(ट) **सूचना तथा संचार सम्वन्धीः**

(१) नगरपालिका क्षेत्र बाहेक जिल्ला विकास क्षेत्रभित्र चलचित्र भवन स्थापना गर्न स्वीकृति दिने ।

(२) जिल्ला विकास क्षेत्रभित्रका नगरपालिका क्षेत्र बाहेक अन्य ग्रामीण क्षेत्रमा जिल्लास्तरीय पुस्तकालय, वाचनालय र सूचना केन्द्र खोल्ने ।

(ठ) **भाषा र संस्कृति सम्वन्धीः**

(१) जिल्ला विकास क्षेत्रभित्रका सांस्कृतिक एवं धार्मिक महत्वका स्थानहरूको अभिलेख राख्ने र मर्मत संभार गराई संरक्षण र सम्वर्द्धन गर्ने ।

(२) विभिन्न भाषा, धर्म र संस्कृतिको सम्वर्द्धन गर्ने, गराउने ।

(३) जिल्ला विकास क्षेत्रभित्रका पुरातात्विक वस्तु, भाषा, धर्म, कला र संस्कृतिको संरक्षण, संवर्द्धन एवं प्रयोग गर्ने, गराउने ।

(ड) **घरेलु उद्योग सम्वन्धीः**

(१) जिल्ला विकास क्षेत्रभित्र स्थापना हुने घरेलु उद्योगहरूको अभिलेख राख्ने ।

(२) जिल्लामा औद्योगिक क्षेत्रको पहिचान र विकास गर्ने ।,

(ढ) **स्वास्थ्य सेवा सम्वन्धीः**

(१) जिल्लास्तरीय, स्वास्थ्य चौकी, अस्पताल, आयुर्वेदीय औषधालय; स्वास्थ्य केन्द्र, स्वास्थ्य चौकीहरूको सञ्चालन तथा व्यवस्थापन गर्ने, गराउने ।

(२) परिवार नियोजन, मातृशिशु कल्याण, विस्तारित खोप, पोषण तथा जनसंख्या शिक्षा, जनस्वास्थ्य जस्ता कार्यक्रमहरूको तर्जुमा र कार्यान्वयन गर्ने ।

(३) जिल्ला विकास क्षेत्र अन्तर्गतका गाउँ विकास क्षेत्रहरूमा उप-स्वास्थ्य चौकी खोल्न स्वीकृति दिने र तिनको निरीक्षण तथा अनुगमन गर्ने ।

(४) जिल्ला विकास क्षेत्रको लागि आवश्यक पर्ने औषधि र चिकित्सा सम्वन्धी औजार तथा उपकरणहरूको आपूर्ति व्यवस्था मिलाई त्यसको गुणस्तर समेतको निरीक्षण तथा अनुगमन गर्ने ।

(५) जिल्ला विकास क्षेत्रमा जनस्वास्थ्यको लागि हानिकारक चिजवस्तुको सार्वजनिक प्रयोगमा रोक लगाउने वा हटाउने ।

(६) जनस्वास्थ्यमा प्रतिकूल असर पर्ने किसिमका उपभोग्य वस्तुको बेचविखन र उपभोगमा रोक लगाउने ।

(ण) **पर्यटन सम्वन्धीः**

जिल्ला विकास क्षेत्रभित्रको प्राकृतिक, सांस्कृतिक, ऐतिहासिक तथा पर्यटकीय सम्पदाको संरक्षण, सम्वर्द्धन, विस्तार र सदुपयोग गर्ने, गराउने ।

(त) **विविधः**

(१) जिल्ला विकास क्षेत्रभित्रको तथ्यांक राख्ने ।

(२) दैवीप्रकोप नियन्त्रण गर्ने सम्वन्धमा आवश्यक काम गर्ने ।

(३) जिल्ला विकास समितिको स्वामित्व तथा नियन्त्रणमा रहेका चल अचल सम्पत्तिको संरक्षण गर्ने ।

(४) जिल्ला विकास समितिको विनियम तर्जुमा गरी जिल्ला परिषद्मा पेश गर्ने ।

(५) प्रचलित कानुनबमोजिम तोकिएका अन्य कार्यहरू गर्ने ।

(२) जिल्ला विकास समितिले स्वीकृत बजेटको परीधिभित्र रही कुनै संघ, संस्था वा निकायलाई कार्यक्रम स्वीकृत गरी अनुदान दिन सक्नेछ ।

(३) जिल्ला विकास समितिले यस ऐनको अधिनमा रही व्यक्ति, सरकारी वा गैर सरकारी संस्था वा व्यक्तिसँग तोकिएबमोजिम संझौता गरी विकास निर्माणका कामहरू गर्न सक्नेछ । त्यसरी भएको सम्झौताको जानकारी नेपाल सरकारलाई दिनु पर्नेछ ।

तर अन्तर्राष्ट्रिय गैर सरकारी संस्था वा विदेशीसँग नेपाल सरकारको पूर्व स्वीकृती नभई त्यस्तो सम्झौता गर्न सक्ने छैन ।

(४) जिल्ला विकास क्षेत्रभित्र संचालित केन्द्रीयस्तरको कुनै आयोजना वा कार्यक्रम प्रभावकारी ढंगले सञ्चालन नभएको वा त्यसमा कुनै किसिमको अनियमितता भएको जानकारी हुन आएमा जिल्ला विकास समितिले सो सम्बन्धमा आवश्यक सुझाव दिन वा कारवाहीको लागि सम्बन्धित निकायसमक्ष सिफारिस गर्न सक्नेछ ।

(५) यस ऐनमा लेखिएदेखि बाहेक जिल्ला विकास समितिको अन्य काम, कर्तव्य र अधिकार तोकिएबमोजिम हुनेछ ।

१९०. **उप-समिति गठन गर्न सक्ने**ः (१) जिल्ला विकास समितिले आफ्नो काममा सहयोग पुऱ्याउन आवश्यकता अनुसार उप-समिति गठन गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम गठन हुने उप-समितिमा उपभोक्ता समूहका प्रतिनिधि, गैर सरकारी संस्थाका प्रतिनिधि, महिला, पिछडिएका वर्ग, बुद्धिजीवी, समाजसेवी तथा विशेषज्ञ समावेश हुन सक्नेछन् ।

(३) उपदफा (१) बमोजिम गठन हुने उप-समितिको काम, कर्तव्य, अधिकार र कार्यविधि जिल्ला विकास समितिले तोकिदिएबमोजिम हुनेछ ।

१९१. **सभापतिको काम, कर्तव्य र अधिकार**ः (१) सभापतिको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) जिल्ला विकास समितिको बैठक बोलाउन सचिवलाई निर्देशन दिने ।

(ख) जिल्ला परिषद् र जिल्ला विकास समितिको बैठकमा प्रतिवेदन र प्रस्ताव पेश गर्ने, गराउने ।

(ग) जिल्ला विकास समितिको बजेट तथा कार्यक्रमहरू तर्जुमा गर्न आवश्यक व्यवस्था मिलाउने ।

(घ) जिल्ला परिषद् र जिल्ला विकास समितिको निर्णय कार्यान्वयन गराई प्रगति विवरण तयार गर्न लगाउने ।

(ङ) उप-सभापति तथा सदस्यहरूलाई विषयगत रूपमा कार्यको विभाजन गर्ने र जिल्लास्तरीय विषयगत कार्यक्रमहरूको रेखदेख र समन्वय गर्ने, गराउने ।

(च) जिल्ला विकास समितिका तर्फबाट आवश्यक सिफारिशहरू गर्ने ।

(छ) आफू जिल्ला बाहिर गई सात दिन भन्दा बढी समय जिल्ला विकास समितिमा उपस्थित हुन नसक्ने भएमा उप-सभापतिलाई कार्यभार दिने र उप-सभापति पनि नभएमा उमेरको आधारमा जेष्ठ सदस्यलाई कार्यभार दिने वा कुनै कारणवश कार्यभार सम्हाल्न नसक्ने अवस्था परेमा सचिवलाई जानकारी दिने ।

(ज) जिल्लास्तरीय कार्यक्रमको सन्दर्भमा सदस्य र सचिवलाई काज खटाउने ।

(झ) जिल्ला विकास क्षेत्र अन्तर्गतका गाउँ विकास समिति समितिहरूको निरीक्षण तथा समन्वय गर्ने ।

(ञ) तोकिएको अन्य काम गर्ने ।

(२) सभापतिले मुनासिब कारण बाहेक लगातार तीस दिनभन्दा बढी आफ्नो जिल्ला छाड्न हुँदैन ।

(३) सभापतिले जिल्लाभित्रका विकास निर्माण कार्यका सन्दर्भमा सात दिनसम्म जिल्लाभित्र आफैं काज स्वीकृत गरी जान सक्नेछ ।

तर आफ्नो जिल्ला बाहिर जानु परेमा जिल्ला विकास समितिबाट स्वीकृत गराई काजमा जान सक्नेछ ।

**१९२. <u>उप-सभापतिको काम, कर्तव्य र अधिकार</u>**: (१) उप-सभापतिको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) सभापतिको अनुपस्थितिमा कार्यबाहक सभापति भई काम गर्ने, र

(ख) तोकिएको अन्य काम गर्ने, गराउने ।

(२) उप-सभापतिले मुनासिव कारण बाहेक लगातार तीस दिनभन्दा बढी आफ्नो जिल्ला छाड्न हुँदैन ।

१९३. **<u>सदस्यको काम, कर्तव्य र अधिकार</u>**: (१) सदस्यहरूको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) आफूलाई तोकिएको विषयसँग सम्वन्धित विषयमा जिल्ला विकास समितिले तयार गरेको योजना जिल्ला विकास योजनामा समावेश गर्न लगाउने ।

(ख) आफूलाई तोकिएको विषयसँग सम्वन्धित विषयमा जिल्ला विकास समितिबाट भए गरेका काम कारवाहीको समय समयमा निरीक्षण गर्ने ।

(ग) आफूलाई तोकिएको विषयमा जिल्ला विकास समिति र जिल्ला विकास समितिको विभिन्न सरकारी तथा गैर-सरकारी सामाजिक संस्थाहरू र उपभोक्ता समूहबीच समन्वय कायम राख्ने व्यवस्था मिलाउने,

(घ) आफूलाई तोकिएको विषयसँग सम्वन्धित विषयका विकास तथा निर्माणको काममा भएको प्रगति सम्वन्धमा आफ्नो सुझावसहितको लिखित जानकारी जिल्ला विकास समितिमा पेश गर्ने ।

(ङ) आफूलाई तोकिएको विषयमा उपभोक्ता समूह तथा गैर-सरकारी संस्थाहरू गठन गर्न स्थानीय जनतालाई प्रोत्साहित गर्ने र तिनलाई विकास कार्यक्रममा परिचालन गर्ने ।

(च) सम्बन्धित गाउँ विकास समिति वा नगरपालिकाको बैठकमा भाग लिई बैठकको काम कारवाहीको सम्बन्धमा जिल्ला विकास समितिसमक्ष प्रतिवेदन दिने ।

(छ) तोकिएका अन्य कार्यहरू गर्ने ।

(२) सदस्यले मुनासिब कारण बाहेक लगातार तीस दिनभन्दा बढी आफ्नो जिल्ला छाड्न हुँदैन ।

१९४. **सचिवको काम, कर्तव्य र अधिकार**ः सभापतिको प्रत्यक्ष निर्देशनमा रही सचिवको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) जिल्ला परिषद् र जिल्ला विकास समितिको सचिव भई काम गर्ने ।

(ख) जिल्ला विकास समितिको निर्णयलाई सभापतिको सामान्य रेखदेखमा रही कार्यान्वयन गर्ने, गराउने ।

(ग) जिल्ला योजनाको कार्यान्वयन निरीक्षण तथा प्रगति मूल्यांकन गर्ने, गराउने ।

(घ) जिल्ला विकास समितिको प्रशासनिक, लेखा व्यवस्था तथा विकास कार्यक्रमहरूको निरीक्षण गर्ने, गराउने ।

(ङ) जिल्लास्तरीय कार्यक्रमहरूको प्रगति निरीक्षण गरी समीक्षा गर्ने, गराउने ।

(च) जिल्ला विकास समिति, जिल्ला परिषद् वा जिल्ला विकास समितिको सदस्यको पद रिक्त भई निर्वाचन गराउनु परेमा सम्वन्धित निकायलाई जानकारी गराउने ।

(छ) जिल्ला विकास समितिको कार्यालयको प्रशासकीय प्रमुख भई काम गर्ने, गराउने ।

(ज) जिल्ला विकास समितिको चल, अचल तथा जिन्सी सम्पत्तिको लगत राख्ने, संरक्षण मर्मत संभार गर्ने, गराउने ।

(झ) जिल्ला परिषद् र जिल्ला विकास समितिको बैठकमा उपस्थित भै निर्णय माइन्यूटिङ्ग गर्ने, निर्णय पुस्तिका जिम्मा लिने र निर्णय प्रमाणित गर्ने ।

(ञ) लेखा परीक्षण गराउने, बेरुजु फछ्र्योट गराउने सम्वन्धमा आवश्यक कारवाही गर्ने, गराउने ।

(ट) जिल्ला विकास समिति अन्तर्गतका कर्मचारीहरूको प्रशासनिक नियन्त्रण गर्ने ।

(ठ) प्रचलित कानुनले तोकेका कमहरू गर्ने, गराउने ।

(ड) यो ऐन वा यस ऐन अन्तर्गत बनेका नियम वा विनियमबमोजिम सुम्पेको वा तोकेको अन्य कामहरू गर्ने ।

## परिच्छेद-५

## जिल्ला विकास समितिको योजना तर्जुमा र कार्यान्वयन प्रक्रिया

**१९५. जिल्ला विकास योजनाको तर्जुमाः** (१) प्रत्येक जिल्ला विकास समितिले आफ्नो जिल्लाको विकासका लागि आवधिक र वार्षिक विकास योजना तर्जुमा गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम तर्जुमा गरिएको योजनाको आधारमा राष्ट्रिय योजना आयोग र नेपाल सरकारको सम्वन्धित मन्त्रालयले जिल्ला विकास समितिलाई कार्तिक महिनाभित्र अनुदान र आवश्यक नीति तथा मार्ग दर्शनहरू उपलब्ध गराउनु पर्नेछ ।

(३) उपदफा (१) र (२) बमोजिम योजना तर्जुमा गर्दा जिल्ला विकास समितिले आवश्यकता अनुसार बाह्य परामर्श सेवा प्राप्त गर्न सक्नेछ ।

(४) आवधिक योजना तयार गर्दा निम्न विषयहरू समावेश गर्नु पर्नेछः-

(क) जिल्लाको भौगोलिक, आर्थिक एवं प्राकृतिक सम्पदाहरू र तिनीहरूको वर्तमान उपयोग,

(ख) विभिन्न क्षेत्रमा तुलनात्मक लागत लाभको हिसाबले उत्पादन गर्न सकिने संभावनाहरू,

(ग) पिछडिएका जनजातिहरू एवं बढी गरीबि भएको क्षेत्र तथा त्यस क्षेत्रमा गरिएका वा गरिनु पर्ने विभिन्न विकास कार्यहरू,

(घ) महिला र बालबालिकाका लागि आयमूलक र सीपमूलक विकास कार्यहरू,

(ङ) सम्पन्न भएका विभिन्न विषयक्षेत्र अन्तर्गतका आयोजनाहरूको विवरण र तिनीहरूको सञ्चालन र संभार सम्वन्धी व्यवस्था ।

(च) विकास संभावनाहरूका आधारमा विभिन्न विषय क्षेत्रगत अल्पकालीन एवं दीर्घकालीन विकास कार्यहरू,

(छ) स्थानीय बासिन्दाबाटै तयार गरिनुपर्ने विभिन्न विषय क्षेत्रका जनशक्ति विकास सम्वन्धी कार्यहरू,

(५) वार्षिक योजना तर्जुमा गर्दा निम्न कुरालाई आधार लिनुपर्नेछः-

(क) राष्ट्रिय योजना आयोग र सम्वन्धित मन्त्रालयबाट प्राप्त निर्देशनहरू,

(ख) राष्ट्रिय लक्ष्य तथा नीतिका आधारमा तय गरिएका जिल्लास्तरीय नीति तथा लक्ष्यहरू,

(ग) आवधिक योजनाले परिलक्षित गरेका समष्टिगत आवश्यकताहरू ।

(घ) गाउँ परिषद् र नगर परिषद्बाट प्राप्त योजनाहरू ।

१९६. **साधनको अनुमान**ः जिल्ला विकास समितिले वार्षिक योजना तर्जुमा गर्नु अगावै देहायका स्रोत र साधनहरूको अनुमान तयार गर्नु पर्नेछः-

(क) जिल्ला विकास समितिको आफ्नै श्रम, स्रोत र साधन ।

(ख) नेपाल सरकारबाट प्राप्त एकमुष्ट अनुदान ।

(ग) नेपाल सरकारका विभिन्न विषयगत मन्त्रालयहरूबाट विषयगत लगानी वापत प्राप्त एकमुष्ट साधन ।

(घ) अन्य संस्थाहरूबाट प्राप्त सहयोग ।

१९७. **योजना तर्जुमा प्रक्रिया**ः (१) जिल्ला विकास समितिले जिल्ला विकास योजना तर्जुमा गर्दा सहभागितामूलक योजना तर्जुमा प्रक्रियाको अवलम्वन गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिमको प्रक्रिया अवलम्वन गर्दा जिल्ला विकास समितिबाट प्राप्त आयोजना तथा कार्यक्रमहरूलाई मूल आधार मान्नु पर्नेछ ।

(३) जिल्ला विकास योजना तर्जुमा गर्दा सेवा केन्द्र, विषयगत योजना तर्जुमा समिति, एकीकृत योजना तर्जुमा समिति, जिल्ला विकास समिति र जिल्ला परिषद्मा आवश्यक छलफल गरी योजना तर्जुमाको काम पूरा गर्नु पर्नेछ ।

(४) योजना तर्जुमाको अन्य प्रक्रिया तोकिएबमोजिम हुनेछ ।

१९८. **एकीकृत योजना तर्जुमा समितिः** (१) जिल्लास्तरमा एक एकीकृत योजना तर्जुमा समिति रहनेछ ।

(२) उपदफा (१) बमोजिमको समितिमा देहायका सदस्यहरू रहने छन्:-

(क) जिल्ला विकास समितिका सभापति - अध्यक्ष

(ख) सम्बन्धित जिल्ला विकास क्षेत्रभित्रका सांसद्हरू - पदेन सदस्य

(ग) विषयगत योजना तर्जुमा समितिका संयोजकहरू - सदस्य

(घ) तोकिएबमोजिमका अन्य व्यक्तिहरू - सदस्य

(३) उपदफा (१) अनुसारको बैठकमा विषयगत योजना तर्जुमा समितिहरूबाट प्राप्त आयोजनाहरूलाई समन्वय तथा प्राथमिकता निर्धारण गरी एकीकृत जिल्ला विकास योजनाको रूप दिइनेछ ।

(४) उपदफा (१) बमोजिमको समितिको बैठकको कार्यविधि तोकिएबमोजिम हुनेछ ।

१९९. **स्रोत नक्सा तयार गर्नुपर्नेः** प्रत्येक जिल्ला विकास समितिले जिल्ला विकासका निमित्त जिल्लाको वस्तुगत तथ्यांक संकलन गरी जिल्लाको वस्तुस्थिति देखिने गरी स्रोत नक्सा तयार गर्नु पर्नेछ ।

२००. **आयोजनाको संभाव्यता अध्ययन गर्नु पर्नेः** जिल्ला विकास समितिले जिल्ला विकास योजना कार्यान्वयन गर्ने क्रममा देहायबमोजिमका कुराहरू समेत खुलाई आयोजनाको संभाव्यता अध्ययन गर्नु गराउनु पर्नेछः-

(क) योजनाको लक्ष्य

(ख) आयोजनाबाट फाइदा पाउने जनताको संख्या र फाइदाको किसिम,

(ग) छनौट गर्न लागिएको आयोजना नयाँ हो वा अधुरो रहेको हो,

(घ) आयोजना सञ्चालन नगरी अन्य कुनै उपायबाट आवश्यकताको पूर्ति वा समस्या समाधान हुन्छ, हुँदैन ।

(ङ) आयोजना सम्पन्न गर्दा लाग्न सक्ने खर्च तथा सामग्रीको मूल्य तथा समयको अनुमान,

(च) उपभोक्ताहरूबाट प्राप्त हुन सक्ने नगद, वस्तुगत श्रम र त्यस्तै अन्य योगदान,

(छ) उपभोक्ताहरूबाट पछि उठ्न सक्ने शुल्क वा मर्मत संभार खर्च वा सञ्चालन व्यवस्था,

(ज) अन्य खुलाउने पर्ने कुरा भए सो ।

२०१. **प्राथमिकता निर्धारणः** जिल्ला विकास योजना तर्जुमा गर्दा निम्नबमोजिमको कार्यक्रमलाई प्राथमकिता दिनु पर्नेछः-

(क) सर्वसाधारण जनतालाई तत्काल प्रत्यक्ष फाइदा हुने तथा रोजगार प्रबर्द्धन हुने र आयमूलक कार्यक्रमहरू ।

(ख) कृषि उत्पादन वृद्धि गर्न सघाउ पुग्ने कार्यक्रमहरू ।

(ग) स्थानीय साधन, सीप र क्षमताको परिचालनबाट सञ्चालन हुन सक्ने कार्यक्रमहरू ।

(घ) वातावरण संरक्षणमा सघाउ पुऱ्याउने कार्यक्रमहरू ।

(ङ) पिछडिएको तथा उत्पीडित जाति, जनजाति एवं महिला र बालबालिकाको लागि आयमूलक तथा सीपमूलक कार्यक्रमहरू ।

२०२. **आयोजनाको छनौटः** (१) आयोजनाको छनौट गर्दा दफा २०० बमोजिमको आयोजना सम्भाव्यता अध्ययन प्रतिवेदनका अतिरिक्त देहायका कुराहरू समेतको आधारमा गर्नुपर्नेछः-

(क) वातावरण संरक्षण तथा संबर्द्धन गर्ने,

(ख) बढी भन्दा बढी स्थानीय वासिन्दाहरूको सहभागिता र श्रम प्राप्त हुने,

(२) उपदफा (१) बमोजिम छनौट भएका आयोजनाको जानकारी जिल्लावासीहरूलाई गराउनु पर्नेछ ।

२०३. **जिल्ला विकास योजना सम्वन्धमा राष्ट्रिय योजना आयोग र नेपाल सरकारको दायित्वः** (१) जिल्ला विकास योजना तर्जुमाका लागि आगामी आर्थिक वर्षको निमित्त आ-आफ्नो विषय क्षेत्रमा विभिन्न जिल्लाहरूलाई प्रदान हुने साधनको पूर्वानुमान र सो सित सम्वन्धित राष्ट्रिय विकास नीति र प्राथमिकता तथा अन्य मार्गदर्शनहरू भए सो समेत उपलब्ध गराउनु पर्नेछ। यसरी उपलब्ध गराइने साधनको पूर्व अनुमान र मार्गदर्शन प्रत्येक जिल्लाको आवधिक योजनाको लक्ष्यबाट राष्ट्रिय योजना आयोगले निर्धारण गरी विषयगत मन्त्रालयहरूलाई निर्देशन दिनु पर्नेछ ।

(२) जिल्ला विकास समितिले जिल्ला विकास योजना तर्जुमा गर्दा गाउँ परिषद् र नगर परिषद्ले बनाउने वार्षिक विकास कार्यक्रमलाई आवश्यक टेवा पुऱ्याउनु पर्नेछ ।

२०४. **जिल्ला विकास समिति र सरकारी तथा गैर-सरकारी निकायबीच समन्वय गर्नेः** (१) एकीकृत जिल्ला विकास योजना तर्जुमा गर्दा जिल्लाभित्र विभिन्न सेवा र विकास कार्यक्रमहरू सञ्चालन गर्ने सरकारी तथा गैर-सरकारी संस्थाबीच बैठक बसी वार्षिक विकास योजनाबीच समन्वय कायम गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिमको समन्वय कायम गर्न सम्वन्धित कार्यालय प्रतिनिधिलाई बोलाई जिल्ला विकास समितिले बैठक गर्नेछ। समन्वय कायम गर्ने सिलसिलामा कुनै मतभेद भएमा राष्ट्रिय योजना आयोगले आवश्यक मध्यस्थता गर्नेछ ।

(३) उपदफा (२) बमोजिम आयोजित समन्वयात्मक बैठकमा देहायका कुराहरूमा समन्वय कायम गर्नुपर्नेछः-

(क) कुनै पनि क्षेत्रमा गरिने लगानीमा दोहोरोपन हटाउने ।

(ख) लगानी गर्ने संस्थाहरूबीच आपसमा परिपूरक समन्वय कायम गर्ने ।

(ग) जिल्लावासीहरूले अधिकतम लाभ हासिल गर्न सक्ने प्रविधि अपनाउने ।

२०५. **योजनाको कार्यान्वयन**: (१) नेपाल सरकारले वार्षिक कार्यक्रम र बजेट पारित भएपछि जिल्ला विकास योजना कार्यान्वयन गर्न अआवश्यक मार्गदर्शनसहित निकासा पठाउनु पर्नेछ ।

(२) जिल्ला विकास समितिबाट पारित कार्यक्रम जिल्ला विकास समितिको निर्देशनमा कार्यान्वयन गर्नु गराउनु पर्नेछ ।

(३) योजना कार्यान्वयन गर्ने जिम्मेवारी गाउँ विकास समिति वा उपभोक्ता समूहको हुनेछ ।

(४) जिल्लास्तरीय योजना अन्तर्गतका आयोजनाहरू उपभोक्ता समिति मार्फत कार्यान्वयन तथा सञ्चालन गराउन सकिनेछ । जिल्ला विकास समितिले आवश्यकता अनुसार बाह्य परामर्श सेवा प्राप्त गरी कार्यान्वयनमा टेवा पुऱ्याउन सक्नेछ ।

२०६. **आयोजनाको हस्तान्तरण**: (१) जिल्लामा विभिन्न सेवा र विकास कार्यमा कार्यरत सरकारी वा अर्ध सरकारी निकायहरूले शुरु गरेको आयोजना सम्पन्न भएपछि सम्वन्धित जिल्ला विकास समितिलाई हस्तान्तरण गर्नु पर्नेछ। त्यसरी हस्तान्तरण भएका आयोजनाको सञ्चालन जिल्ला विकास समिति र सम्वन्धित निकायबीच सहमति भए अनुरूप हुनेछ ।

(२) उपदफा (१) बमोजिम आयोजना हस्तान्तरण गर्ने निकायले जिल्ला विकास समितिलाई प्राविधिक तथा परामर्श सेवा उपलब्ध गराई जिल्ला विकास समितिको क्षमता विकास गराउनु पर्नेछ ।

२०७. **निर्देशन पालना गर्नुपर्ने**: (१) जिल्ला विकास समितिहरूलाई जिल्ला विकास योजना तर्जुमा र सञ्चालन गर्ने सम्वन्धमा राष्ट्रिय योजना आयोग र नेपाल सरकारको सम्वन्धित मन्त्रालयले समय समयमा आवश्यक निर्देशन दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम दिएको निर्देशन जिल्ला विकास समितिले पालन गर्नु पर्नेछ ।

२०८. **उपभोक्ता समूह गठन गर्ने**: (१) जिल्ला विकास योजना अन्तर्गतका आयोजनाहरू कार्यान्वय गर्दा आयोजनाबाट प्रत्यक्ष लाभ पाउने व्यक्तिहरू मध्येबाट जिल्ला विकास समितिले सम्वन्धित निकाय समेतको परामर्श लिई उपभोक्ता समिति गठन गराउनु पर्नेछ ।

(२) उपभोक्ता समितिको काम, कर्तव्य र अधिकार तोकिएबमोजिम हुनेछ ।

२०९. **उपभोक्ता समूह तथा गैर-सरकारी संस्थाले आयोजना सञ्चालन गर्ने बारे**: (१) उपभोक्ता समूह तथा गैर-सरकारी संस्थाले आयोजनाहरू कार्यान्वयन र सञ्चालन गर्दा जिल्ला विकास समितिसँग समन्वय राखी गर्नु पर्नेछ ।

(२) जिल्ला विकास समितिले उपभोक्ता समूह गैर-सरकारी संस्था मार्फत योजना कार्यान्वयन र सञ्चालन गर्न सक्नेछ ।

(३) आयोजना कार्यान्वयन गर्ने उपभोक्ता समूह र गैर-सरकारी संस्थाले आफ्नो आर्थिक कारोवारको हिसाव किताव तथा लेखा आवधिक गरी राख्नु पर्नेछ ।

(४) आयोजना कार्यान्वयन गर्ने उपभोक्ता समूह र गैर सरकारी संस्थाले आफ्नो कारोवारको लेखाको प्रतिवेदन जिल्ला विकास समितिलाई दिनु पर्नेछ र लेखा परीक्षण गराउने जिम्मेवारी आयोजना कार्यान्वयन गर्ने निकाय र जिल्ला विकास समितिको हुनेछ ।

(५) आयोजनाको लगत इष्टिमेट तोकिएबमोजिम गर्नुपर्नेछ ।

(६) उपभोक्ता समूह र गैर सरकारी संस्थाले आयोजना जाँचपाँस भई फरफारक भएपछि आयोजनाको मर्मत संभार तथा सञ्चालनको लागि सेवा प्राप्त गर्ने उपभोक्तासँग आवश्यक शुल्क लिन सक्नेछ ।

२१०. **सुपरीवेक्षण तथा अनुगमनः** (१) जिल्ला विकास समितिले योजना वा कार्यक्रम तर्जुमा गर्दा अनुमान गरिएका स्रोत साधनहरूको परिचालन लक्ष्य अनुरूप भए नभएको, आयोजनाको कार्यान्वयन तालिका अनुसार भए नभएको एकीन गर्न तथा आयोजनाको कार्यान्वयमा देखिने बाधा व्यवधान वा अड्चनहरू समाधानको लागि आवश्यक निर्देशन दिन सम्वन्धित जिल्लाका सांसदको अध्यक्षतामा प्रत्येक वर्षको लागि वर्णानुक्रमानुसार एक सुपरीवेक्षण तथा अनुगमन समितिको गठन हुनेछ। उक्त समितिमा जिल्ला विकास समितिका सभापति, निजले तोकेको जिल्ला विकास समितिका सदस्य तथा सम्बन्धित कर्मचारीहरू समेत रहनेछन्।

(२) उपदफा (१) बमोजिमको समितिको बैठक सामान्यतया चार महिनामा एकपटक बस्नेछ र सो बैठकमा जिल्ला विकास समितिका सम्वन्धित सदस्यले भाग लिनु पर्नेछ।

(३) उपदफा (१) बमोजिमको समितिको बैठकमा आयोजनाका लागि अनुमान गरिएको साधन, प्राप्त भएको साधन र गर्नुपर्ने कामको लेखा जोखा गर्नु पर्नेछ।

(४) उपदफा (१) बमोजिमको बैठकले कार्य तालिका र लक्ष्य अनुसार काम नभएकोमा सम्वन्धित पक्षलाई सचेत गराउन सक्नेछ।

२११. **समीक्षा र मूल्यांकनः** (१) जिल्ला विकास समितिले जिल्ला विकास योजनाको समीक्षा र मूल्यांकन देहाय अनुसार गर्नुपर्नेछः-

(क) सम्पन्न भएका प्रत्येक आयोजनाको एक वर्षपछि प्रभाव मूल्यांकन गर्ने।

(ख) सञ्चालन भइरहेका आयोजनाहरूको विषयगत विवरण तथा प्रगति मूल्यांकन प्रत्येक ६ महिनामा गर्ने।

(ग) सम्पन्न भएका आयोजनाको मर्मत संभार सम्वन्धी व्यवस्थाको मूल्यांकन प्रत्येक वर्ष गर्ने।

(घ) आयोजनाबाट लाभान्वित समुदायको किसिम र परिणाम पहिचान गर्ने।

(ङ) आयोजनाबाट भएको उत्पादन वृद्धि एवं रोजगारीको अवसरहरू पहिचान गर्ने ।

(च) आयोजनाबाट पर्यावरणमा परेको प्रभाव पहिचान गर्ने ।

(२) जिल्ला विकास समितिले जिल्ला विकास योजनाको समीक्षा देहाय अनुसार गर्नेछः-

(क) उपदफा (१) बमोजिम मूल्यांकन भएपछि जिल्ला विकास समितिको नियमित बैठकमा समीक्षा गर्ने ।

(ख) खण्ड (क) अनुसार हुने समीक्षा बैठकमा सरकारी, गैर सरकारी र दातृ संस्थाका प्रतिनिधिहरूलाई समेत आ-आफ्नो क्षेत्रबाट संचालित जिल्लास्तरीय कार्यक्रमहरूको प्रगति विवरणसहित समीक्षाका लागि आमन्त्रण गर्ने ।

(ग) समीक्षा बैठकमा प्राप्त सुझाव समेत राखी त्यसको प्रतिवेदन सम्वन्धित आयोजना सञ्चालन गर्ने निकायमा पठाउने र त्यस्तो प्रतिवेदन जिल्ला परिषद्को नियमित बैठकमा प्रस्तुत गर्ने ।

(३) उपदफा (१) र (२) बमोजिम जिल्ला विकास योजनाको समीक्षा र मूल्यांकन गर्दा जिल्ला विकास क्षेत्रभित्र संचालित कुनै आयोजना वा कार्यक्रममा कुनै किसिमको अनियमितता भएको जनाकारी हुन आएमा जिल्ला विकास समितिले आवश्यक कारवाहीको लागि सम्बन्धित निकायमा सिफारिस गर्नेछ ।

२१२. **<u>सूचना तथा अभिलेख केन्द्र</u>**: जिल्लाको वास्तविक स्थितिको पहिचान र योजनाबद्ध विकास प्रक्रिया अभिवृद्धि गर्न प्रत्येक जिल्ला विकास समितिमा एक सूचना तथा अभिलेख केन्द्र रहनेछ। त्यस्तो सूचना तथा अभिलेख केन्द्रले देहायबमोजिमका सूचना तथा अभिलेख संकलन गरी राख्नु पर्नेछः-

(क) जिल्लास्थित प्रत्येक गाउँ विकास समिति, नगरपालिका तथा जिल्ला विकास समितिको अध्यावधिक वस्तुगत प्रतिवेदन ।

(ख) जिल्लाको वार्षिक मूल्यांकन प्रतिवेदन ।

(ग) प्रत्येक गाउँस्तरीय एवं नगरस्तरीय आवधिक योजना ।

(घ) जिल्लाको आवधिक योजना ।

(ङ) जिल्ला विकास समितिको वार्षिक लेखा परीक्षण प्रतिवेदन ।

(च) प्रत्येक गाउँ विकास समिति र नगरपालिकाको वार्षिक कार्यक्रम ।

(छ) जिल्ला विकास समितिको समष्टिगत वार्षिक कार्यक्रम ।

(ज) जिल्लाभित्र सञ्चालन भइरहेका गैर-सरकारी तथा निजी क्षेत्रका कार्यक्रमको विवरण तथा प्रगति ।

(झ) जिल्लाभित्र गरिएका अध्ययन अनुसन्धान प्रतिवेदनहरू ।

२१३. **जाँचपास तथा फरफारक**: (१) आयोजना सम्पन्न भएपछि आयोजनाको जाँचपास र फरफारक गर्नु गराउनु पर्नेछ ।

(२) आयोजना सञ्चालन गर्ने निकायबाट आयोजना सम्पन्न भएको जानकारी जिल्ला विकास समितिमा प्राप्त भएपछि प्राविधिकले पेश गरेको कार्य सम्पन्न प्रतिवेदन र मूल्यांकनको आधारमा जिल्ला विकास समितिले जाँचपास र फरफारक गर्नेछ ।

२१४. **आयोजनाको सञ्चालन तथा मर्मत संभार**: (१) जिल्ला विकास समितिले सम्पन्न आयोजनाहरूको सञ्चालनको लागि सम्वन्धित निकाय वा उपभोक्ता समूहलाई हस्तान्तरण गरी सञ्चालन तथा मर्मत संभार गर्न गराउन सक्नेछ ।

(२) ठूला आयोजनाहरूको सञ्चालन तथा मर्मत संभारको कार्य सम्वन्धित निकायले बाँडफाँड गरी गर्ने निर्णय भएमा जिल्ला विकास समितिको प्राविधिक तथा वित्तीय स्रोत समेत विचार गरी मर्मत संभारको कार्य संयुक्त रूपले गर्न सकिनेछ ।

(३) आयोजनाबाट आवश्यक शुल्क उठाउने अभिभारा आयोजना सञ्चालन र मर्मत संभार गर्ने निकायको हुनेछ ।

(४) जिल्ला विकास समितिले उपभोक्ताहरूबाट उठाउने सेवा शुल्क तथा मर्मत संभार खर्च जिल्ला विकास समितिले निर्णय गरेबमोजिम हुनेछ । यस्तो शुल्क निर्धारण गर्न आवश्यक प्राविधिक र अन्य सहयोग सम्वन्धित निकायहरूबाट प्राप्त गर्न सकिनेछ ।

## परिच्छेद-६

## आर्थिक व्यवस्था

२१५. **जिल्ला विकास समितिले लगाउन पाउने कर**: (१) जिल्ला विकास समितिले जिल्ला विकास क्षेत्रमा तोकिएको दरमा नबढ्ने गरी जिल्ला परिषद्बाट पारित दरमा आफूले निर्माण गरेको वा आफूलाई हस्तान्तरण भई आएका सडक, बाटो, पुल, सिंचाई, कुलो, पोखरी आदिमा कर लगाउन सक्नेछ ।

(२) जिल्ला विकास समितिले जिल्ला विकास क्षेत्रमा तोकिएको दरमा नबढ्ने गरी जिल्ला परिषद्बाट पारित दरमा ऊन, खोटो, जडिबुटी, वनकस (खर), कवाडी माल, ढुंगा, स्लेट, बालुवा तथा प्रचलित कानुनबमोजिम निषेधित जीवजन्तु बाहेक अन्य मृत जीवजन्तुको हाड, सिंग, प्वाँख, छाला आदि र तोकिएबमोजिमका अन्य वस्तुमा कर लगाउन सक्नेछ ।

(३) उपदफा (२) बमोजिमको करबाट प्राप्त रकम मध्ये ३५-५० प्रतिशत सम्म रकम सम्बन्धित गाउँ विकास समिति र नगरपालिकालाई दिनुपर्नेछ ।

२१६. **सेवा शुल्क**: जिल्ला विकास समितिले आफ्नो क्षेत्रभित्र तोकिएको दरमा नबढ्ने गरी जिल्ला परिषद्बाट पारित दरमा देहायबमोजिमको सेवा शुल्क लगाउन सक्नेछः-

(क) आफूले निर्माण गरेका वा आफ्नो जिम्मा रहेका अतिथि गृह, पुस्तकालय, चिकित्सालय, धर्मशाला, सभा गृह आदिको सेवा शुल्क ।

(ख) आफूले निर्माण गरेका कुलो, पैनी, बाँध आदिको सेवा शुल्क ।

(ग) स्थानीय विकास शुल्क ।

(घ) तोकिएबमोजिमका अन्य सेवा शुल्क ।

२१७. **दस्तुर**: जिल्ला विकास समितिले आफ्नो क्षेत्रभित्र तोकिएको दरमा नबढ्ने गरी जिल्ला परिषद्बाट पारित दरमा देहायबमोजिमको दस्तुर लगाउन सक्नेछः-

(क) नदीहरूमा जल विहार गर्ने, डुंगा तथा तुइन चलाउने र माछा मार्ने अनुमति तथा नवीकरण दस्तुर ।

(ख) पानीघाटको दर्ता तथा नवीकरणको दस्तुर ।

(ग) सिफारिश दस्तुर ।

(घ) तोकिएबमोजिमको अन्य दस्तुर ।

२१८. **बिक्रीः** जिल्ला विकास समितिले आफ्नो क्षेत्रभित्रका नदीनालाको बालुवा, गिटी, ढुँगा, स्लेट, माटो दहतर वहतर आदि तोकिएबमोजिम बिक्री गर्न सक्नेछ । यसरी बस्तुहरूको बिक्रीबाट प्राप्त रकममध्ये ३५-५० प्रतिशत सम्म रकम सम्बन्धित गाउँ विकास समिति र नगरपालिकालाई दिनुपर्नेछ ।

२१९. **ऋण लिन सक्नेः** जिल्ला विकास समितिले जिल्ला परिषद्बाट स्वीकृत नीति अनुसार आफ्नो अक भोगको चल अचल सम्पत्ति धितो राखी वा नराखी वा नेपाल सरकारको जमानीमा बैंक वा अन्य कुनै संघ संस्थाबाट ऋण सापटी लिन सक्नेछ ।

२२०. **राजश्व बाँडफाँड सम्वन्धी व्यवस्थाः** (१) देहायको रकममध्ये तोकिएबमोजिमको रकम सम्वन्धित जिल्ला विकास समितिले पाउनेछः-

(क) घर जग्गाको खरिद बिक्री वापत नेपाल सरकारलाई प्राप्त हुने रजिष्ट्रेसन दस्तुर,

(ख) खानी, पेट्रोलियम, वन, जलस्रोत तथा तथा अन्य प्राकृतिक स्रोत को रोयल्टी बापत नेपाल सरकारलाई प्राप्त हुने रकम ।

(ग) पर्यटकहरू जिल्ला विकास क्षेत्रमा प्रवेश गर्दा नेपाल सरकारलाई प्राप्त हुने प्रवेश दस्तुर ।

२२१. **जिल्ला विकास समितिको कोषः** (१) जिल्ला विकास समितिको एउटा कोष रहनेछ ।

(२) उपदफा (१) बमोजिमको कोषमा देहायका रकमहरू रहनेछन्:-

(क) नेपाल सरकारबाट प्राप्त हुने रकम ।

(ख) कर, दस्तुर, महसुल तथा शुल्कबाट प्राप्त रकम ।

(ग) गाउँ विकास समिति र नगरपालिकाबाट उठाइएको मालपोतको पच्चीस प्रतिशत रकम ।

(घ) जिल्ला विकास समितिको चल अचल सम्पत्ति वा अन्य वस्तुको बिक्री, बहाल, भाडा, व्याजबाट उठेको रकम ।

(ङ) कुनै व्यक्ति वा संस्थाबाट प्राप्त उपहार, चन्दा, अनुदान वा सहायताको रकम ।

(च) विदेशी सरकार वा अन्तर्राष्ट्रिय संघ संस्थाबाट प्राप्त रकम ।

(छ) राजश्व बांडफांडबाट प्राप्त रकम, दण्ड जरिवानाबाट उठेको रकम ।

(ज) जिल्ला विकास समितिले सञ्चालन गरेका आयमूलक कार्यक्रमबाट प्राप्त रकम ।

(झ) जिल्ला विकास समितिले बैंक वा अन्य कुनै संघ संस्थाबाट लिएको ऋण सापटी रकम ।

(ञ) अन्य स्रोत बाट प्राप्त रकम ।

(३) जिल्ला विकास समितिले खण्ड (च) बमोजिमको रकम प्राप्त गर्नुअघि नेपाल सरकारको स्वीकृति लिनुपर्नेछ ।

(४) कोषमा जम्मा भएको रकम बैंकमा राख्नु पर्नेछ ।

२२२. **<u>कोषको रकम खर्च गर्ने तरिकाः</u>** (१) कोषको सञ्चालन सचिव र जिल्ला विकास समितिको लेखा प्रमुखको संयुक्त दस्तखतबाट हुनेछ ।

(२) सभापतिले स्वीकृत बजेटको परिधिभित्र रही आर्थिक सहायतामा तोकिएबमोजिमको रकम खर्च गर्न सक्नेछ ।

(३) सचिवले जिल्ला परिषद्ले पारित गरेको बजेटको अधिनमा रही जिल्ला विकास समितिको निर्णय कार्यान्वयन गर्न रकम खर्च गर्न सक्नेछ ।

(४) कोषको रकम खर्च गर्दा जिल्ला परिषद्ले पारित गरेको बजेटको अधिनमा रही प्रचलित कानुनबमोजिम खर्च गर्नु पर्नेछ ।

(५) विकास कार्यक्रम सञ्चालन गर्दा विषयगत कार्यक्रमका लागि प्राप्त रकम सोही कार्यक्रममा खर्च गर्नुपर्नेछ अन्य कार्यक्रम र शीर्षकमा खर्च गर्न पाइने छैन ।

(६) लेखा प्रमुखले तोकिएबमोजिम जिल्ला विकास समितिको आम्दानी खर्चको लेखा राख्नु पर्नेछ र त्यसको लेखापरीक्षण गराउनु पर्नेछ ।

(७) जिल्ला विकास समितिको प्रशासनिक खर्च तोकिएबमोजिम हुनेछ ।

२२३. **निर्माण, खरिद तथा अन्य ठेक्का पट्टा स्वीकृतिको व्यवस्था**: निर्माण, खरिद, ठेक्का पट्टा वा अन्य आर्थिक कारोवार सम्वन्धी प्रक्रिया तोकिएबमोजिम हुनेछ ।

२२४. **रकमान्तर**: (१) जिल्ला परिषद्बाट पारित वार्षिक बजेट शीर्षकको बीस प्रतिशतमा नबढाई जिल्ला विकास समितिले रकमान्तर गर्न सक्नेछ ।

तर भैपरी आउने र आर्थिक सहायता शीर्षकमा रकमान्तर हुने छैन ।

(२) भैपरी आउने रकमको खर्च तोकिएबमोजिम हुनेछ ।

२२५. **लिलाम बिक्रीको व्यवस्था**: जिल्ला परिषद्बाट स्वीकृत नीति अनुसार जिल्ला विकास समितिलाई काम नलाग्ने सरसामान वा सम्पत्तिको लिलाम वा बिक्री तोकिएबमोजिम हुनेछ ।

२२६. **बजेटको बाँकी रकम**: एक आर्थिक वर्षमा खर्च हुन नसकी बाँकी रहन गएको बजेटको रकम चालू वर्षमा अधुरा रहेका आयोजना र कार्यक्रम सञ्चालन गर्नको लागि आगामी आर्थिक वर्षको बजेटमा समावेश गर्नु पर्नेछ ।

२२७. **जिल्ला विकास समितिको आय र व्ययको विवरण**: (१) जिल्ला विकास समितिले जिल्लामा आन्तरिक स्रोत साधन, मालपोत रकम, स्थानीय विकास शुल्क, दान, चन्दा, सहायता, उपहार, अन्य कर, दस्तुर, महसूल, शुल्क तथा सम्पत्ति वा साधन स्रोत, बिक्री, ऋण तथा अनुदानबाट प्राप्त हुने रकम छुट्टा छुट्टै देखिने गरी श्रेस्ता राख्नु पर्नेछ ।

(२) आय र व्ययको शीर्षक र हिसावको श्रेस्ता तोकिएबमोजिम हुनेछ ।

२२८. **प्रशासनिक खर्चको हद**: नेपाल सरकारले विशेष रूपले किटान गरी खर्च गर्न स्वीकृति दिएमा बाहेक नेपाल सरकारले दिएको अनुदान रकम तोकिएबमोजिमको प्रतिशतभन्दा बढी प्रशासनिक काममा खर्च गर्न पाइने छैन ।

२२९. **सदस्यहरूको बैठक भत्ता र अन्य सुविधा**: सदस्यहरूको बैठक भत्ता र अन्य सुविधा तोकिएबमोजिम हुनेछ ।

२३०. **जिल्ला विकास समितिले अनुदान दिने**: (१) जिल्ला विकास समितिले आफूलाई प्राप्त हुने रकम मध्ये केही रकम तोकिएबमोजिम गाउँस्तरका कार्यक्रमहरूमा खर्च गर्न गाउँ विकास समितिलाई अनुदानको रूपमा उपलब्ध गराउनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम अनुदान रकम उपलब्ध गराउँदा कार्यक्रमको माग, जनसंख्या, भौगोलिक विकटता, आन्तरिक स्रोतको सीमितता आदिलाई ध्यानमा राख्नु पर्नेछ ।

२३१. **जिल्ला विकास समितिको सम्पत्ति**: (१) कोषको रकमबाट बनेको वा खरिद भएको वा जिल्ला विकास समितिलाई नेपाल सरकार वा कुनै व्यक्ति वा संस्थाले हक छाडि दिएको सम्पत्तिमा जिल्ला विकास समितिको हक हुनेछ र त्यस्तो सम्पत्ति जिल्ला विकास समितिले रेखदेख र प्रवन्ध गर्नुपर्नेछ ।

(२) उपदफा (१) बमोजिम अचल सम्पत्ति जिल्लाविकास समितिले नेपाल सरकारको स्वीकृतिबिना बेचविखन गर्न वा अरू कुनै व्यहोराले हक छाडिदिन पाउने छैन । स्वीकृत बिना वेचविखन गरिदिएमा वा हक छाडिदिएमा जुनसुकै अवस्थामा पनि बदर हुनेछ ।

२३२. **लेखापरीक्षण**: (१) जिल्ला विकास समितिको आन्तरिक लेखापरीक्षण आन्तरिक लेखापरीक्षण शाखाले गर्नेछ ।

(२) जिल्ला विकास समितिको अन्तिम लेखापरीक्षण महालेखा परीक्षकबाट हुनेछ ।

(३) जिल्ला परिषद्ले लेखा समतिको राय सुझावसहित प्राप्त प्रतिवेदनमा छलफल गरी लेखापरीक्षणबाट कायम भएका बेरुजु नियमित गर्न नमिल्ने भएमा बेरुजु फछ्र्योटको लागि जिल्ला विकास समितिलाई निर्देशन दिनु पर्नेछ ।

## परिच्छेद - ७

## दण्ड सजाय

२३३. **दण्ड सजाय गर्न सक्ने**: (१) यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम वा विनियम वा आदेश उल्लंघन गरी कसैले कुनै काम गरेमा जिल्ला विकास समितिले एक हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ। सोही अपराध पटक-पटक गरेमा पटकै पिच्छे उक्त जरिवानाको रकममा शत प्रतिशत थपी जरिवाना गर्न सक्नेछ।

(२) कसैको जाना-जानी वा लापरवाहीले जिल्ला विकास समितिको जिम्मामा रहेको सम्पत्ति अधिकार प्राप्त अधिकारीको इजाजत बेगर फेरबदल गरेमा वा हिनामिना वा नोक्सान गरेमा वा गर्न लगाएमा जिल्ला विकास समितिले त्यस्तो हानी नोक्सानी समेत सो व्यक्तिबाट असुल उपर गर्न सक्नेछ।



## भाग-५

## स्थानीय निकाय सम्बन्धी सामान्य व्यवस्था

## परिच्छेद - १

## नेपाल सरकार र स्थानीय निकाय बीचको सम्बन्ध

२३४. **नेपाल सरकारले निर्देशन दिन सक्ने**: (१) नेपाल सरकारले स्थानीय निकायलाई प्रचलित कानूनद्वारा तोकिएको कार्यहरू सम्पादन गरे नगरेको, पिछडिएका जनजाति, महिला तथा बालबालिकाहरूको हितलाई आवश्यक प्राथमिकता दिए नदिएको, पर्यावरण सन्तुलन जस्ता विषयले प्रश्रय पाए-नपाएको जस्ता विषयहरूमा नियमित अनुगमन गरी आवश्यक निर्देशन दिन सक्नेछ।

(२) उपदफा (१) बमोजिम नेपाल सरकारले दिएको निर्देशन पालन गर्नु सम्बन्धित स्थानीय निकायको कर्तव्य हुनेछ।

२३५. **विशेष कार्यक्रम लागू गर्न सक्ने**: नेपाल सरकारले स्थानीय निकायको सुदृढीकरण तथा क्षमता अभिबृद्धि गर्न विशेष कार्यक्रम तर्जुमा गरी लागू गर्न सक्नेछ।

२३६. **<u>नेपाल सरकारले अनुदान दिने</u>**: (१) प्रत्येक वर्ष नेपाल सरकारले स्थानीय निकायलाई तोकिएको न्यूनतम अनुदान उपलब्ध गराउनुको अतिरिक्त सम्बन्धित स्थानीय निकायको जनसंख्या, विकासको स्तर, राजश्व परिचालन गर्न सक्ने संभाव्यता र क्षमता, वित्तीय साधनको आवश्यकता, आय र व्ययको नियमित अभिलेखन कार्य, लेखा परीक्षणको स्थिति, आर्थिक अनुशासनको स्थिति जस्ता आधारमा थप अनुदान रकम उपलब्ध गराउन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम प्राप्त हुने अनुदान रकमहरूको खर्च प्रणाली र कार्यविधिहरू नेपाल सरकारले तोक्न सक्नेछ ।

२३७. **<u>वित्तीय आयोग गठन गर्न सक्ने</u>**: स्थानीय निकायहरूले लगाउने कर तथा नेपाल सरकार र स्थानीय निकाय बीच बाँडफाँड गर्नु पर्ने राजश्व सम्बन्धमा अध्ययन तथा अनुसन्धान गर्न, कर पद्धति तथा लेखा प्रणाली समसामयिक बनाउन लिनु पर्ने नीतिगत विषयमा सुझाव प्रस्तुत गर्न नेपाल सरकारले स्थानीय निकायको सम्बन्धित महासंघको प्रतिनिधि समेत रहने गरी वित्तीय आयोग गठन गर्न सक्नेछ ।

२३८. **<u>निलम्बन र भंग गर्न सक्ने</u>**: (१) कुनै स्थानीय निकायले देहायको कुनै काम कारबाही गरेको छ भन्ने पर्याप्त आधार भएमा नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी त्यस्तो स्थानीय निकायलाई निलम्बन गर्न सक्नेछः-

(क) नेपाल अधिराज्यको संविधान, २०४७ विपरीत हुने गरी नेपालको सार्वभौमसत्ता, अखण्डता, राष्ट्रियता वा साम्प्रदायिक सद्भावनामा आँच आउने कुनै काम कारबाही गरेमा ।

(ख) स्थानीय निकायको सम्पत्ति वा आय हिनामिना गरेमा ।

(ग) काबु बाहिरको परिस्थिति परेमा बाहेक एक वर्षसम्म स्थानीय निकायको बैठक नबसाई स्थानीय निकायको कार्य सम्पादनमा बाधा उत्पन्न गरेमा ।

(२) उपदफा (१) बमोजिम कुनै स्थानीय निकायलाई निलम्बन गर्नु अघि विशेष गम्भीर परिस्थितिमा बाहेक त्यसरी निलम्बन नगर्नु पर्ने कारण भए सो प्रस्तुत गर्ने मौकाबाट सम्बन्धित स्थानीय निकायलाई बञ्चित गरिने छैन ।

(३) उपदफा (१) बमोजिम कुनै स्थानीय निकाय निलम्बन भएमा सो निकायले गर्ने काम कारवाही गर्नको निमित्त नेपाल सरकारले आवश्यक व्यवस्था गर्न सक्नेछ ।

(४) उपदफा (१) बमोजिम निलम्बन भएको जानकारी नेपाल सरकारले निलम्बन भएपछि बसेको संसद्को दुवै सदनमा पेश गर्नुपर्नेछ ।

(५) उपदफा (१) बमोजिम निलम्बन भएको स्थानीय निकायको सम्बन्धमा त्यसरी निलम्बन भएको मितिले तीन महिनाभित्र छानबिन गरी कारबाही किनारा लगाई सक्नु पर्नेछ । सो म्यादभित्र कारबाही किनारा नभएमा त्यस्तो निलम्बन स्वतः निष्कृय हुनेछ ।

(६) उपदफा (५) बमोजिम छानबीन गर्दा भङ्ग गर्नुपर्ने आधार प्रमाणित भएमा त्यस्तो स्थानीय निकायलाई नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी भंङ्ग गर्न सक्नेछ ।

(७) उपदफा (६) बमोजिम कुनै स्थानीय निकायलाई भंङ्ग गरिएमा त्यसको कारणसहितको विवरण नेपाल सरकारले संसदको दुबै सदनमा पेश गर्नु पर्नेछ ।

(८) उपदफा (५) बमोजिम भंग भएको स्थानीय निकायका सदस्यहरूको निर्वाचन त्यसरी भंगभएको मितिले एक वर्षभित्र गरीसक्नु पर्नेछ । निर्वाचन नभएसम्मलाई त्यस्तो स्थानीय निकायले गर्ने काम कारबाही गर्ने गराउने व्यवस्था नेपाल सरकारले गर्नेछ ।



२३९. **म्याद थप गर्न सक्ने**: प्राकृतिक प्रकोप, आर्थिक विश्रृङ्खलता वा त्यस्तै अन्य विशेष परिस्थिति परी स्थानीय निकायको सदस्यहरूको समयमा निर्वाचन हुन नसकेमा नेपाल सरकारले बढीमा एक वर्षको लागि म्याद थप गरी वा अन्य तबरबाट कार्य सञ्चालन गर्ने व्यवस्था मिलाउन सक्नेछ ।

२४०. **नेपाल सरकारसँग सम्पर्क**: (१) स्थानीय निकायले नेपाल सरकारसँग सम्पर्क राख्दा स्थानीय विकास मन्त्रालय मार्फत् राख्नु पर्नेछ ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि बजेट र कार्यक्रमको सम्बन्धमा स्थानीय निकायले अन्य मन्त्रालयहरूसँग सोझै सम्पर्क राख्न सक्नेछ ।

२४१. **अनुगमन समितिको गठनः** (१) यस ऐनको उद्देश्य, नीति तथा व्यवस्था अनुरूप कार्यहरू सम्पादन भएका छन् छैनन् सो को अनुगमन गर्न तथा स्थानीय स्वायत्त शासन सम्बन्धी मान्यता अनुरूप कार्य गर्न लगाउन देहायबमोजिमको विकेन्द्रीकरण कार्यान्वयन तथा अनुगमन समितिको गठन हुनेछः-

| | | | |
|---|---|---|---|
| (क) | प्रधानमन्त्री | - | अध्यक्ष |
| (ख) | स्थानीय विकास मन्त्री | - | उपाध्यक्ष |
| (ग) | प्रतिनिधि सभामा विपक्षी दलको नेता | - | सदस्य |
| (घ) | नेपाल सरकारका मन्त्रीहरू | - | सदस्य |
| (ङ) | प्रतिनिधि सभाको सम्बन्धित समितिका सभापति | - | सदस्य |
| (च) | उपाध्यक्ष, राष्ट्रिय योजना आयोग | - | सदस्य |
| (छ) | सदस्यहरू, राष्ट्रिय योजना आयोग | - | सदस्य |
| (ज) | नेपाल सरकारको मुख्य सचिव | - | सदस्य |
| (झ) | नेपाल सरकारका मन्त्रालयहरूका सचिवहरू | - | सदस्य |
| (ञ) | प्रतिनिधि सभामा प्रतिनिधित्व गरेका राजनैतिक दलका एक/एक जना प्रतिनिधि | - | सदस्य |
| (ट) | स्थानीय निकायसँग सम्बन्धित संघ, महासंघका सभापतिहरू | - | सदस्य |
| (ठ) | उपदफा (५) बमोजिम गठित समितिको संयोजक | - | सदस्य |
| (ड) | स्थानीय विकास मन्त्रालयका सचिव | - | सदस्य-सचिव |

(२) उपदफा (१) बमोजिम गठित समितिको कार्यविधि समिति आफैंले तोकेबमोजिम हुनेछ ।

(३) उपदफा (१) बमोजिम गठित समितिले आफ्नो कामको प्रतिवेदन प्रत्येक वर्ष प्रतिनिधि सभाको सम्बन्धित समिति समक्ष पेश गर्नु पर्नेछ ।

(४) उपदफा (३) बमोजिम पेश भएको प्रतिवेदनमा त्यस्तो समितिबाट प्राप्त निर्देशन कार्यान्वयन गर्नु गराउनु पर्नेछ ।

(५) उपदफा (१) बमोजिम गठन भएको समिति अन्तर्गत सो समितिको मार्ग निर्देशनमा काम गर्ने गरी एक कार्य समिति गठन हुनेछ ।

(६) उपदफा (५) बमोजिमको कार्य समितिमा देहायबमोजिमका सदस्यहरू रहनेछन्:-

(क) स्थानीय विकास मन्त्री वा राज्य मन्त्री - संयोजक

(ख) स्थानीय विकास मन्त्रालयका सचिव - सदस्य

(ग) विकेन्द्रीकरण, राजश्व, लेखा, ग्रामीण विकास, प्रशासन तथा कानुनका क्षेत्रमा कम्तीमा दश वर्ष अनुभव प्राप्त विज्ञहरूमध्येबाट नेपाल सरकारले तोकेको छ जना व्यक्तिहरू - सदस्य

(घ) कम्तीमा राजपत्रांकित प्रथम श्रेणीको नेपाल सरकारले तोकेको व्यक्ति - सदस्य-सचिव

(७) उपदफा (६) बमोजिम गठन भएको कार्य समितिमा नेपाल सरकारले तोकेका सदस्यहरूको पदावधि ३ वर्षको हुनेछ ।

(८) उपदफा (६) बमोजिम तोकिएका सदस्यहरूलाई नेपाल सरकारले पुनः २ वर्षको पदावधि थप गर्न सक्नेछ ।

(९) उपदफा (६) बमोजिम तोकिएका सदस्यहरूको सेवा, सुविधा र पारिश्रमिक नेपाल सरकारले तोके बमोजिम हुनेछ ।

२४२. **अधिकार सुम्पन सक्ने**: (१) नेपाल सरकारले यस ऐनबमोजिम आफूलाई प्राप्त सबै वा केही अधिकार नेपाल राजपत्रमा सूचना प्रकाशन गरी कुनै समिति, संस्था वा अधिकारीलाई सुम्पन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम प्रदान गरेको अधिकार जुनसुकै बखत नेपाल सरकारले फिर्ता लिन सक्नेछ ।

२४३. **सम्बन्धित मन्त्रालयले पालना गर्नु पर्ने कुराहरू**: (१) स्थानीय स्तरमा गरिने विकास-निर्माणको कार्यहरूलाई गाउँस्तरीय कार्यत्रम, नगरस्तरीय कार्यक्रम तथा जिल्लास्तरीय कार्यक्रम भनी सम्बन्धित मन्त्रालयले तोक्नुपर्नेछ ।

(२) स्थानीय निकायको आगामी वर्षको कार्यक्रमहरूको लागि दिइने अनुदानको अनुमान कार्तिक महिनाभित्र सम्बन्धित मन्त्रालयले स्थानीय निकायलाई पठाउनु पर्नेछ ।

(३) स्थानीय निकायको कार्यक्रम सञ्चालन गर्न सम्बन्धित मन्त्रालयले स्थानीय निकायलाई प्राविधिक रूपमा सक्षम बनाउन आवश्यक सहयोग गर्नु पर्नेछ ।

(४) विषय नतोकी स्थानीय निकायमा पठाइने वार्षिक अनुदान स्थानीय विकास मन्त्रालयले पठाउनु पर्नेछ ।

२४४. **समन्वय समिति गठन गर्ने**: (१) जिल्ला विकास समितिले आफ्नो सचिवालयका विकाससँग सम्बन्धित विषयगत इकाइका प्रमुख, नगर प्रमुख तथा सेवा केन्द्रहरूका संयोजकहरू रहेको एउटा समन्वय समिति गठन गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम गठित समितिले जिल्लाभित्रको विकास निर्माणको कार्य सम्पादनमा समन्वय गर्न सहयोग पुऱ्याउनेछ ।

(३) उपदफा (१) बमोजिम गठित समितिको अन्य काम, कर्तव्य र अधिकार तोकिएबमोजिम हुनेछ ।

२४५. **जिल्लास्तरीय कार्यालयहरूले सहयोग गर्नु पर्ने**: स्थानीय निकायहरूले आफ्नो क्षेत्रभित्र विकास र निर्माणसम्बन्धी काम गर्नको निमित्त सम्बन्धित जिल्लास्तरीय कार्यालयसँग

सहयोग माग गरेमा त्यस्ता कार्यालयहरूले स्थानीय निकायलाई आवश्यक सहयोग उपलब्ध गराउनु पर्नेछ ।

२४६. **राजनैतिक दलहरूले सहयोग गर्नु पर्नेः** स्थानीय निकायले यो ऐन र यस ऐन अन्तर्गत बनेको नियमबमोजिम आफूले गर्नु पर्ने काम गर्नको निमित्त राजनैतिक दलहरूसँग सहयोग माग गरेमा त्यस्ता राजनैतिक दलहरूले आवश्यक सहयोग उपलब्ध गराउनु पर्नेछ ।

२४७. **प्रहरीले सहयोग गर्नु पर्नेः** स्थानीय निकायले कानुनको परिधिभित्र रही गरेको आदेश वा निर्णयको पालना गराउन सहयोग माग गरेमा स्थानीय प्रहरीले आवश्यक सहयोग गर्नु पर्नेछ ।

## परिच्छेद-२

## प्रशासकीय संगठन र कर्मचारी व्यवस्था

२४८. **कार्यालयको स्थापनाः** प्रत्येक स्थानीय निकायको आ-आफ्नै कार्यालय हुनेछ ।

२४९. **कर्मचारी दरबन्दीको श्रृजनाः** (१) स्थानीय निकायले आफूलाई आवश्यक पर्ने कर्मचारीको दरबन्दी कार्यबोझको आधारमा प्रत्येक निकायले गर्नु पर्ने कार्यहरूको पूर्ण विवरण तयार गरी सम्बन्धित परिषद्बाट स्वीकृत गराउनु पर्नेछ ।

(२) कर्मचारीको दरबन्दी स्वीकृत गर्दा सम्बन्धित परिषद्ले कर्मचारीको लागि चाहिने तलब, भत्ता, संचय कोष कट्टी रकम, उपदान तथा निवृत्तभरण आदिको लागि लाग्ने खर्चको व्यवस्था समेत गर्नु पर्नेछ ।

२५०. **कर्मचारीको पारिश्रमिक तथा अन्य सुविधाः** (१) कर्मचारीको पारिश्रमिकको निर्धारण सम्बन्धित स्थानीय निकायको परिषद्बाट हुनेछ ।

(२) कर्मचारीहरूको तलबमान नेपाल सरकारको निजामती सेवाका कर्मचारीहरूको तलबमानलाई आधार मानी निर्धारण गर्नु पर्नेछ ।

(३) स्थानीय निकायले आफ्नो स्रोत , साधन र प्रशासनिक बजेटको परिधिभित्र रही आफ्ना कर्मचारीहरूलाई स्थानीय भत्ता एवं अन्य थप सुविधा दिन सक्नेछ ।

२५१. **आयोजनाको लागि थप कर्मचारीको व्यवस्था**ः कुनै खास अवधिमा सम्पन्न हुने आयोजनाको लागि आवश्यक पर्ने कर्मचारीको लागि लाग्ने प्रशासनिक खर्च सम्बन्धित आयोजनामा नै राखी आयोजनाको काम सकिएपछि स्वतः नरहने गरी सम्बन्धित परिषद्ले कर्मचारी नियुक्ति गर्न स्वीकृति दिन सक्नेछ ।

२५२. **प्राविधिक सेवा र कर्मचारीहरू करारमा लिन सक्ने**ः कुनै खास प्रकृतिको निश्चित अवधिमा सम्पन्न हुने कामका लागि सम्बन्धित परिषद्ले परामर्श दातृ व्यक्ति वा संस्था वा कर्मचारीहरू करारमा लिन सक्नेछ ।

२५३. **सचिवको व्यवस्था**: नेपाल सरकारले स्थानीय निकायको दैनिक कार्य सञ्चालनको लागि सचिवको नियुक्ति गर्नेछ ।

२५४. **सरुवा सम्बन्धी व्यवस्था**: नेपाल सरकारका कर्मचारीहरू स्थानीय निकायको सेवामा सरुवा भई जान चाहेमा नेपाल सरकारले तोकिएबमोजिमको प्रक्रिया पूरा गरी सरुवा गर्न सक्नेछ ।

२५५. **कर्मचारीको सेवा शर्त**: (१) स्थानीय निकायहरूको कार्य सञ्चालनका लागि ऐनद्वारा स्थानीय सेवा गठन गरिनेछ । उक्त सेवाको सञ्चालन र सेवाका शर्तहरू सोही ऐनद्वारा निर्धारण गरिएबमोजिम हुनेछन् ।

(२) उपदफा (१) बमोजिमको व्यवस्था नहुन्जेलसम्मका लागि स्थानीय निकायहरूले सचिव बाहेक अन्य कर्मचारीहरू नियुक्ति गर्न सक्नेछन् ।

(३) दफा २५३ को व्यवस्था उपदफा (१) बमोजिमको व्यवस्था नहुन्जेलसम्मको लागि मात्र कायम रहनेछ ।

२५६. **कर्मचारीहरू काजमा खटाउने**ः (१) यस ऐनबमोजिम स्थानीय निकायले गर्नुपर्ने कामको लागि सम्बन्धित स्थानीय निकायको अनुरोधमा नेपाल सरकारले नेपाल सरकार वा नेपाल सरकारको अनुदानबाट संचालित निकायका कर्मचारीहरूलाई त्यस्तो स्थानीय निकायमा काजमा खटाउन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम काजमा खटी जाने कर्मचारीहरूको जवाफदेही सम्बन्धित स्थानीय निकायप्रति नै रहनेछ ।

(३) उपदफा (१) बमोजिम स्थानीय निकायमा काजमा खटिएका कर्मचारीहरूको कामको मूल्यांकनको आधारमा पुरस्कार वा विभागीय कारवाहीको लागि सम्बन्धित निकायसमक्ष सिफारिस गर्न सक्नेछ ।

२५७. **विषयगत शाखाको स्थापना:** (१) जिल्ला विकास समितिले जिल्ला विकास क्षेत्रभित्र गर्ने विकास निर्माणसम्बन्धी कार्यको लागि तोकिएको मापदण्डको आधारमा आ-आफ्नो कार्यालयमा विषयगत शाखा स्थापना गर्न सक्नेछ ।

(२) उपदफा (१) अनुसार विषयगत शाखाहरू स्थापना नभएसम्म नेपाल सरकारका जिल्लास्तरीय विकास कार्यालयहरूले जिल्लास्तरीय विकास निर्माणसम्बन्धी कामको लागि जिल्ला विकास समितिको निर्देशनअनुसार काम गर्नेछन् ।

(३) जिल्ला विकास समितिले विषयगत शाखा स्थापना गरिसकेपछि सोही कामका लागि नेपाल सरकारका विषयगत कार्यालयहरू रहने छैनन् । विषयगत कार्यालयहरू नरहेपछि ती कार्यालयहरूको कार्यालय भवन र कार्यालय सञ्चालनसम्बन्धी भौतिक सुविधाहरू जिल्ला विकास समितिलाई हस्तान्तरण गरिनेछ ।

(४) नगरपालिकाहरूले पनि तोकिएको मापदण्डको आधारमा आफ्नो कार्यालयमा विषयगत शाखाहरू खोल्न सक्नेछ छन् ।

(५) नगरपालिका र जिल्ला विकास समितिको विषयगत शाखाको लागि आवश्यक कर्मचारीहरू नेपाल सरकारले काजमा खटाउन सक्नेछ ।

(६) जिल्ला विकास समितिले नगरपालिकालाई विकास निर्माणसम्बन्धी काममा सहयोग पुऱ्याउनेछ ।

## परिच्छेद - ३

## विविध

२५८. **जग्गा प्राप्त गर्न सक्ने**: स्थानीय निकायले आफ्नो क्षेत्रभित्र कुनै विकास तथा निर्माण सम्बन्धी काम सञ्चालन गर्न जग्गा प्राप्त गर्नु पर्ने भएमा सो कामको लागि आवश्यक पर्ने जग्गा प्रचलित कानुनको रीत पुऱ्याई सम्बन्धित जग्गा धनीलाई जग्गाको मुआब्जा दिई प्राप्त गर्न सक्नेछ ।

२५९. **नाता प्रमाणित गर्नेः** (१) कसैले कसैसँगको नाताको प्रमाणपत्र चाहियो भनी गाउँ विकास समिति वा नगरपालिकामा निवेदन दिन आएमा अध्यक्ष वा प्रमुखले जाँचबुझ गरी ठीक ठहरेमा तोकिएको दस्तुर लिई नाता प्रमाणितको प्रमाणपत्र दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम अध्यक्ष वा प्रमुखले नाता प्रमाणित गरी प्रमाणपत्र दिँदा अपनाउनुपर्ने कार्यविधि तोकिएबमोजिम हुनेछ ।

२६०. **सरकारी बाँकी सरह असुल उपर हुनेः** स्थानीय निकायले ठेकेको वा लगाएको कर, दस्तुर, शुल्क तथा असुल गर्न बाँकी अन्य रकम कुनै व्यक्तिले नबुझाएमा सरकारी बाँकी सरह जिल्ला प्रशासन कार्यालयले असुल उपर गरिदिनु पर्नेछ ।

२६१. **स्थानीय निकायले क्षमताअनुसार कार्यक्रम सञ्चालन गर्नु पर्नेः** (१) यस ऐनबमोजिम स्थानीय निकायले आफूलाई प्राप्त भएको अधिकारको प्रयोग गरी कार्यक्रम सञ्चालन गर्दा आफ्नो स्रोत, साधन र क्षमताको आधारमा गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम आफ्नो स्रोत , साधन र क्षमताले नभ्याउने अवस्थामा नेपाल सरकारको सहयोग प्राप्त हुने भएमा मात्र त्यस्ता कार्यक्रमहरूको सञ्चालन गर्नु पर्नेछ ।

२६२. **स्थानीय निकायको अधिकारको प्रयोगः** यस ऐनबमोजिम गाउँ विकास समिति, नगरपालिका तथा जिल्ला विकास समितिलाई प्राप्त अधिकार यस ऐनमा अन्यथा व्यवस्था भएकोमा बाहेक गाउँ विकास समिति, नगरपालिका तथा जिल्ला विकास समितिले प्रयोग गर्नेछ ।

२६३. **वैदेशिक सम्पर्कः** स्थानीय निकायहरूले विदेशी सरकार, अन्तर्राष्ट्रिय संघ संगठन, कुटनैतिक नियोग र अन्तर्राष्ट्रिय गैर सरकारी संस्थासँग सम्पर्क राख्दा नेपाल सरकारको पूर्व स्वीकृति लिनु पर्नेछ ।

२६४. **अधिकार प्रत्यायोजनः** यस ऐनबमोजिम स्थानीय निकायहरूले आफूलाई प्राप्त अधिकारमध्ये केही अधिकार आफू अन्तरगतका समिति, उप समिति र सदस्यहरूलाई प्रत्यायोजन गर्न सक्नेछन् ।

२६५. **नियम तथा विनियम बनाउने अधिकार**: (१) यस ऐनको उद्देश्य कार्यान्वयन गर्न नेपाल सरकारले आवश्यक नियम बनाउन सक्नेछ ।

(२) यो ऐन र यस ऐन अन्तर्गत बनेको नियमको अधिनमा रही स्थानीय निकायले आफ्नो कार्य सञ्चालन गर्न विनियम बनाउन सक्नेछ ।

२६६. **सम्पत्ति र दायित्व सर्ने**: यो ऐन प्रारम्भ भएपछि गाउँ विकास समिति ऐन, २०४८, नगरपालिका ऐन, २०४८ र जिल्ला विकास समित ऐन, २०४८ बमोजिम गठित गाउँ विकास समिति, नगरपालिका र जिल्ला विकास समितिको सम्पत्ति र दायित्व यस ऐनबमोजिम गठित गाउँ विकास समिति, नगरपालिका र जिल्ला विकास समितिमा सर्नेछ ।

२६७. **काम कारबाही सदर मानिने**: यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि स्थानीय निकायको गठनमा कुनै त्रुटी वा कुनै सदस्यको स्थान रिक्त भई काम कारबाही भएको रहेछ भने त्यस्तो कारणले मात्र स्थानीय निकायको काम कारबाही बदर हुने छैन ।

२६८. **खारेजी र बचाउ**: (१) गाउँ विकास समिति ऐन, २०४८, नगरपालिका ऐन, २०४८, जिल्ला विकास समिति ऐन, २०४८ र विकेन्द्रीकरण ऐन, २०३९ खारेज गरिएका छन् ।

(२) गाउँ विकास समिति ऐन, २०४८, नगरपालिका ऐन, २०४८ र जिल्ला विकास समिति ऐन, २०४८ बमोजिम भए गरेका काम कारबाही यसै ऐनबमोजिम भए-गरेको मानिनेछ ।

(३) यो ऐन प्रारम्भ हुँदाका बखत कायम रहेका गाउँ विकास समिति, नगरपालिका र जिल्ला विकास समितिहरू यस ऐनबमोजिमको गाउँ विकास समिति, नगरपालिका र जिल्ला विकास समितिहरू गठन नभएसम्म कायमै रहनेछन् ।



द्रष्टव्य : १. केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६३ ले देहाय शब्दको सट्टा देहायको शब्द राखी रूपान्तरण गरेकोछ :
"श्री ५ सरकार" को सट्टा "नेपाल सरकार"